॥ श्री गणेशाय नमः ॥

ॐ

श्री परमात्मने नमः

॥ अथ ॥

# ॥ शङ्खस्मृतिः ॥

## ॥ अथ प्रथमोऽध्यायः ॥

(पहिलो अध्याय)

### । अथ ब्राह्मणादीनां कर्मवर्णनम् ।

(ब्राह्मण आदिका कर्म)

**स्वयम्भुवे नमस्कृत्य सृष्टिसंहारकारिणे ।**
**चातुर्वर्ण्यहितार्थाय शङ्खः शास्त्राथाकरोत् ॥१॥**

सृष्टि एवं संहार कर्ता भगवान् स्वयम्भूलाई नमस्कार गरी चार वर्णव्यवस्थाको भलो गर्न शङ्ख ऋषिले धर्मशास्त्रको रचना गर्नु भयो ।

**यजनं याजनं दानं तथैवाध्यापनक्रियाम् ।**
**प्रतिग्रहञ्चाध्ययनं विप्रः कर्माणि कारयेत् ॥२॥**

ब्राह्मणले यज्ञ गर्नू, यज्ञ गराउनू, दान दिनू, दान लिनू, वेदको अध्ययन गर्नू र वेद पढाउनू-यी कर्म गर्नू ।

**दानमध्ययनञ्चैव यजनञ्च यथाविधि ।**
**क्षत्त्रियस्य तु वैश्यस्य कर्मेदं परिकीर्तितम् ॥३॥**

दान दिनु, वेद पढ्नु र विधिपूर्वक यज्ञ गर्नु क्षत्रिय र वैश्यका (सामान्य) कर्म बताइएको छ ।

**क्षत्त्रियस्य विशेषेण प्रजानां परिपालनम् ।**
**कृषिगोरक्षवाणिज्यं वैश्यस्य परिकीर्तितम् ॥४॥**

प्रजाको परिपालन गर्नु क्षत्रियको विशेष कर्म बताइएको छ । कृषि, गोपालन र

व्यापार वैश्यको विशेष कर्म बताइएको छ ।

**शूद्रस्य द्विजशुश्रूषा सर्वशिल्पानि चाप्यथ ।**
**क्षमा सत्यं दमः शौचं सर्वेषामविशेषतः ॥५॥**

शूद्रको कर्म द्विजको सेवा गर्नु र सबै प्रकारको शिल्प पेसा गर्नु हो । क्षमा, सत्य, दम र सबै कुराको पवित्रता सबै वर्णको सामान्य धर्म हो ।

**ब्राह्मणः क्षत्रियो वैश्यस्त्रयो वर्णा द्विजातयः ।**
**तेषां जन्म द्वितईीन्तु विज्ञेयं मौञ्जिबन्धनम् ॥६॥**

ब्राह्मण, क्षत्रिय र वैश्यलाई द्विजन्मा भनी बताइएको छ । मौञ्जीबन्धनलाई यिनको दोश्रो जन्म बताइएको छ ।

**आचार्यस्तु पिता प्रोक्तः सावित्री जननी तथा ।**
**ब्रह्मक्षत्त्रविशाश्चैव मौञ्जिबन्धनजन्मनि ॥७॥**

ब्राह्मण, क्षत्रिय र वैश्यका मौञ्जी-बन्धनले हुने दोश्रो जन्ममा आचार्यलाई पिता र सावित्री (गायत्री) लाई माता बताइएको छ ।

**वृत्त्या शूद्रसमास्तावद्विज्ञेयास्ते विचक्षणैः ।**
**यावद्वेदेन जायन्ते द्विजा ज्ञेयास्ततः परम् ॥८॥**

सबै जन्मले शूद्रसमान हुन्छन् भनी बुद्धिमानले समझिनू । तर, त्यसपछि जब वेद अध्ययनले तिनको अर्को जन्म हुन्छ तब ती द्विज हुन्छन् भनी जान्नू ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे प्रथमोऽध्यायः ॥१॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
पहिलो अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-०+८=८



शुरुदेखिको श्लोक सङ्ख्या : ८

## ॥ अथ द्वितीयोऽध्यायः ॥
## (दोश्रो अध्याय)
## अथ ब्राह्मणादीनां संस्कारवर्णनम् ।
## (ब्राह्मण आदिको संस्कार)

**गर्भस्य स्फुटताज्ञाने निषेकः परिकीर्तितः ।**
**पुरा तु स्पन्दनात् कार्यं पुंसवनं विचक्षणैः ॥१॥**

गर्भ रहेको स्पष्टरुपमा थाहा पाएपछि गर्भाधान संस्कार र गर्भ हलचल गर्नुपूर्व बुद्धिमानले पुंसवन संस्कार गर्नुपर्ने कुरा बताइएको छ ।

**षष्टेऽष्टमे वा सीमन्तो जाते वै जातकर्म च ।**
**अशौचे तु व्यतिक्रान्ते नामकर्म विधीयते ॥२॥**

(जन्मेको) छैटौं वा आठौं (महिनामा) सीमन्तोन्नयन संस्कार, जन्मेपछि जातकर्म संस्कार र सूतक सकिए पछि नामकरण संस्कार गर्नुपर्ने विधान छ ।

**नामधेयञ्च कर्तव्यं वर्णानाञ्च समाक्षरम् ।**
**माङ्गल्यं ब्राह्मणस्योक्तं क्षत्रियस्य बलान्वितम् ॥**
**वैश्यस्य धनसंयुक्तं शूद्रस्य तु जुगुप्सितम् ॥३॥**

नामराख्दा जोर अक्षरमा राख्नु पर्दछ । यसैगरी ब्राह्मणको मङ्गलसूचक, क्षत्रियको बलले युक्त, वैश्यको धनले युक्त र शूद्रको घृणास्पद नाम राखिनु पर्दछ भनिएको छ ।

**शर्मान्तं ब्राह्मणस्योक्तं वर्मान्तं क्षत्रियस्य तु ।**
**धनान्तं चैव वैश्यस्य दासान्त वान्त्यजन्मनः ॥४॥**

ब्राह्मणको नामको अन्तमा शर्मा, क्षत्रियको नामको अन्तमा वर्मा, वैश्यको नामको अन्तमा धन र शूद्रको नामको अन्तमा दास हुनुपर्ने बताइएको छ ।

**चतुर्थे मासि कर्तव्यमादित्यस्य प्रदर्शनम् ।**
**षष्ठेऽन्नप्राशनं मासि चूडा कार्या यथाकुलम् ॥५॥**

चौथो महिनामा सूर्यदर्शन संस्कार, छैटौं महिनामा अन्नप्राशन संस्कार र
कुलपरम्परा अनुसार चूडाकर्म संस्कार गर्नू ।

**गर्भाष्टमेऽब्दे कर्तव्यं ब्राह्मणस्योपनायनम् ।**
**गर्भादेकादशे राज्ञो गर्भात्तु द्वादशे विशः ॥६॥**

गर्भरहेको समयबाट गनी आठौं वर्षमा ब्राह्मणको, एघारौं वर्षमा क्षत्रियको र
बाह्रौं वर्षमा वैश्यको उपनयन संस्कार गरिनु पर्दछ ।

**षोडशाब्दस्तु विप्रस्य द्वाविंश क्षत्त्रियस्य तु ।**
**विंशति सचतुष्का च वैश्यस्य परिकीर्तिता ॥७॥**

उपनयन गर्ने उमेरको अन्तिम सीमा ब्राह्मणको सोह्र, क्षत्रियको बाईस
र वैश्यको चौबीस वर्ष बताइएको छ ।

**नाभिभाषेत सावित्रीमत ऊर्ध्वं निवर्तयेत् ।**
**विज्ञातव्यास्त्रयोऽप्येते यथाकालमसंस्कृता ॥**
**सावित्रीपतिता व्रात्याः सर्वधर्मबहिष्कृताः ॥८॥**

यसभन्दा पछि गायत्री मन्त्रको उपदेश नगर्नू, फर्काइ दिनू । समयमै संस्कार नगरिएका यस्ता
द्विज सावित्री-पतित, व्रात्य र सबै धर्मबाट बहिष्कृत हुन्छन् भनेर जान्नू ।

**मौञ्जी ज्या शणतान्तवी क्रमान्मौञ्जी प्रकीर्तिता ।**
**मार्गवैयाघ्रवास्तानि चर्माणि ब्रह्मचारिणाम् ॥९॥**

(ब्राह्मण, क्षत्रिय र वैश्यका लागि) मूँज, धनुको ताँदो र सनको डोरो क्रमैले कन्धनी तथा मृग,
बाघ र बोकाको छाला क्रमैले ब्रह्मचारीका चर्म हुन्छन् ।

**पर्णपिप्पलबिल्वानां क्रमाद्दण्डाः प्रकीर्तिताः ।**
**केशदेशललाटास्यतुल्याः प्रोक्ताः क्रमेण तु ॥१०॥**

यिनका लागि क्रमैले पलाश, पीपल र बेलको दण्ड बताइएको छ र यी कमशः
केशस्थान, निधार र मुखसम्म पुग्ने हुनुपर्दछ भनिएको छ।

**अवक्राः सत्वचः सर्वे नाग्निदग्धास्तथैव च ।**
**यज्ञोपवीतं कार्पासक्षौमोर्णानां यथाक्रमम् ॥११॥**

दण्ड सोझो, बोक्रा सहितको र नडढेको हुनुपर्दछ भने ब्रह्मचारी द्विजले क्रमैले कपास, आलस र ऊनले बनेको जनै लगाउनू ।

**आदिमध्यावसानेषु भवच्छब्दोपलक्षितम् ।**
**भैक्षस्य वरणं प्रोक्तं वर्णानामनुपूर्वशः ॥१२॥**

तीन वर्णले क्रमैले 'भवत्' शब्दलाई क्रमशः शुरु, मध्य र अन्तमा प्रयोग गरी भिक्षाचरण गर्नुपर्ने बताइएको छ ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे द्वितीयोऽध्यायः ॥२॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
दोश्रो अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-८+१२=२०



शुरुदेखिको श्लोक सङ्ख्या : २०



## ॥ अथ तृतीयोऽध्यायः ॥
## (तेश्रो अध्याय)
## अथ ब्रह्मचर्याद्याचारवर्णनम् ।
## (ब्रह्मचर्य आदि आचार)

**उपनीयः गुरुः शिष्यं शिक्षयेच्छौचमादितः ।**
**आचारमग्निकार्यं च सन्ध्योपासनमेव च ॥१॥**

शिष्यको उपनयन गराई गुरुले शुरुबाटै शौच, आचार, याज्ञिक कर्म र सन्ध्योपासना आदिको शिक्षा दिनू ।

**स गुरुर्यः क्रियां कृत्वा वेदमस्मै प्रयच्छति ।**
**भृतकाध्यापको यस्तु उपाध्यायः स उच्यते ॥२॥**

त्यही गुरु हुन्छ जसले यी कर्म गराई उसलाई वेद प्रदान गर्दछ । जो शुल्क लिई अध्यापन गर्दछ उसलाई चाहीँ उपाध्याय भनिन्छ ।

**माता पिता गुरुश्चैव पूजनीयाः सदा नृणाम् ।**
**क्रियास्तस्याऽफलाः सर्वा यस्यैतेऽनादृतास्त्रयः ॥३॥**

मानिसका लागि माता, पिता तथा गुरु सदा पूजनीय हुन्छन् । जसले यी तीनको अनादर गर्दछ त्यसले गर्ने सबै कर्म निष्फल हुन्छ ।

**प्रयतः कल्यमुत्थाय स्नातो हुतहुताशनः ।**
**कुर्वीत प्रयतो भक्त्या गुरुणामभिवादनम् ॥४॥**

संयमित भई विहान उठी नुहाएर अग्निमा हवन गरी शान्तचित्तले भक्तिपूर्वक गुरुलाई अभिवादन गर्नू ।

**अनुज्ञातश्च गुरुणा ततोऽध्ययनमाचरेत् ।**
**कृत्वा ब्रह्माञ्जलिं पश्यन् गुरोर्वदनमानतः ॥५॥**

गुरुको आज्ञा लिई त्यसपछि वेदको अध्ययन गर्नेतिर लाग्नू । ब्रह्माञ्जली बनाएर नतमस्तक भई गुरुको मुखमा हेर्दैरहनू ।

**ब्रह्मावसाने प्रारम्भे प्रणवञ्च प्रकीर्तयेत् ।**
**अनध्यायेष्वध्ययनं वर्जयेच्च प्रयत्नतः ॥६॥**

वेदपाठ गर्नूपूर्व र गरिसकेपछि ॐ भन्ने गर्नू । पढ्न नहुने समयमा प्रयत्नपूर्वक वेद पढ्ने नगर्नू ।

**चतुर्दशीं पञ्चदशीमष्टमीं राहुसूतकम् ।**
**उल्कापातं महीकम्पमशौचं ग्रामविप्लवम् ॥७॥**
**इन्द्रप्रयागं सुरतं घनसंघातनिःस्वनम् ।**
**वाद्यकोलाहलं युद्धमनध्यायान् विवर्जयेत् ॥८॥**

चतुर्दशी, औँसी, पूर्णिमा, ग्रहण, उल्कापात, भूकम्प, जुठोसूतक, गाऊँमा विपत्ति पर्दा, इन्द्र देवताको उत्सवमा, कामवासना जागेको बेला, बादल गर्जंदा, बाज चराको कोलाहलमा र युद्धको समयमा वेदको अध्ययन गर्ने कार्य नगर्नू ।

**नाधीयीताभियुक्तोऽपि यानगो न च नौगतः ।**
**देवायतनवल्मीकश्मशानशवसन्निधौ ॥९॥**

कसैले अनुरोध गरेपनि कुनै सवारी साधन चढेका बेलामा, डुँगा चढेका बेलामा तथा देवालय, धमिराको गोलो, मसान र शवका नजिकमा वेद नपढ्नू ।

**भैक्षचर्य्यान्तथा कुर्याद् ब्राह्मणेषु यथाविधि ।**
**गुरुणा चाभ्यनुज्ञातः प्राश्नीयात् प्राङ्मुखः शुचिः ॥१०॥**

विधिपूर्वक ब्राह्मण परिवारसँग भिक्षा माग्नू । गुरुको आज्ञाले पवित्र भई पूर्वतिर फर्केर खानू ।

**हितं प्रियं गुरोः कुर्यादहङ्कारविवर्जितः ।**
**उपास्य पश्चिमां सन्ध्यां पूजयीत्वा हुताशनम् ॥११॥**

साँझमा सन्ध्योपासना सकी अग्निको पूजा गरेर अहङ्कार नराखी गुरु-हितका कार्य गर्नू ।

**अभिवाद्य गुरुं पश्चाद्गुरोर्वचनकृद्भवेत् ।**
**गुरोः पूर्वं समुत्तिष्ठेच्छयीत चरमं तथा ॥१२॥**

गुरुलाई अभिवादन गरेपछि उनको आज्ञापालना गर्नू । गुरुभन्दा पहिला उठ्नू र गुरु सुतेपछि सुत्नू ।

**मधुमांसाञ्जनं श्राद्धं गीतं नृत्यञ्च वर्जयेत् ।**
**हिंसापवादवादांश्च स्त्रीलीलां च विशेषतः ॥१३॥**

मह, मासु, गाजल, श्राद्धभोजन, गीत, नाच, हिंसा, निन्दा, विवाद तथा खासगरी स्त्रीसँगको क्रिडा परित्याग गर्नू ।

**मेखलामजिनं दण्डं धारयेच्चप्रयत्नतः ।**
**अधःशायी भवेन्नित्यं ब्रह्मचारी समाहितः ॥१४॥**

ब्रह्मचारीले मेखला, चर्म र दण्ड यत्नपूर्वक बोकी राख्नू । ब्रह्मचारीले सधैं संयमित भई जमिनमा सुत्नू ।

**एवं कृत्यन्तु कुर्वीत वेदस्वीकरणे बुधः ।**
**गुरवे च धनं दत्त्वा स्नायाच्च तदनन्तरम् ॥१५॥**

बुद्धिमानले वेदप्राप्त गर्न यी कर्म गर्नू र गुरुलाई धन दिई त्यसपछि स्नान (वेद समापन) गर्नू ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे तृतीयोऽध्यायः ॥३॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
तेश्रो अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-२०+१५=३५



शुरुदेखिको श्लोक सङ्ख्या : ३५



## ॥ अथ चतुर्थोऽध्यायः ॥
## (चौथो अध्याय)
## अथ विवाहसंस्कारवर्णनम् ।
## (विवाह संस्कार)

**विन्देत विधिवद्भार्यामसमानार्षगोत्रजाम् ।**
**मातृतः पञ्चमीञ्चापि पितृतस्त्वथ सप्तमीम् ॥१॥**

विद्यास्नान पछि आफ्नाभन्दा फरक प्रवर र गोत्रकी तथा आमाका पाँच र बाबुका सात पुस्ता परकी पत्नीलाई विधिपूर्वक प्राप्त गर्नू ।

**ब्राह्मो दैवस्तथैवाऽऽर्षः प्राजापत्यस्तथाऽऽसुरः ।**
**गान्धर्वो राक्षसश्चैव पैशाचश्चाष्टमोऽधमः ॥२॥**

ब्राह्म, दैव, आर्ष, प्राजापत्य, आसुर, गान्धर्व, राक्षस र आठौं अत्यन्त निकृष्ट पैशाच : यी आठ विवाहका विधि हुन् ।

**एते धर्म्यास्तु चत्वारः पूर्वे विप्रे प्रकीर्तिताः ।**
**गान्धर्वो राक्षसश्चैव क्षत्त्रियस्य प्रशस्यते ॥३॥**

यिनमा पहिलाका चार विधि ब्राह्मणका लागि बताइएका छन् । गान्धर्व र राक्षस विधि क्षत्रियका लागि उत्तम बताइएको छ ।

**अप्रार्थितः प्रयत्नेन ब्राह्मस्तु परिकीर्तितः ।**
**यज्ञेषु ऋत्विजे दैव आदायार्षस्तु गोद्वयम् ॥४॥**
**प्रार्थितः संप्रदानेन प्राजापत्यः प्रकीर्तितः ।**
**आसुरो द्रविणादानाद् गान्धर्वः समयान्मिथः ॥**
**राक्षसो युद्धहरणात् पैशाचः कन्यकाच्छलात् ॥५॥**

प्रार्थना गरी बोलाई कन्या दिई गरिने विवाहलाई ब्राह्मविवाह बताइएको छ । यज्ञका ऋत्विज्लाई कन्या दिई गरिने विवाहलाई दैवविवाह, वरसँग दुई वटा गाई लिई गरिने विवाहलाई आर्षविवाह, 'तिमि दुई साथ मिली धर्मको पालना गर' भनी कन्या दिई गरिने विवाहलाई प्राजापत्य विवाह, वरसँग धन लिएर गरिने विवाहलाई आसुर विवाह, वर तथा कन्या आपसमा (स्वेच्छाले) मिलेर गर्ने विवाहलाई गान्धर्व विवाह, युद्ध गरी कन्याहरण गर्नुलाई राक्षस विवाह र छल गरी कन्याहरण गर्नुलाई पैशाच विवाह भनिन्छ ।

**तिस्रस्तु भार्य्या विप्रस्य द्वे भार्ये क्षत्रियस्य तु ।**
**एकैव भार्या वैश्यस्य तथा शूद्रस्य कीर्तिता ॥६॥**

ब्राह्मणले तीन, क्षत्रियले दुई तथा वैश्य र शूद्रले एउटी मात्र पत्नी राख्न सक्दछ ।

**ब्राह्मणी क्षत्त्रिया वैश्या ब्राह्मणस्य प्रकीर्तिता ।**
**क्षत्त्रिया चैव वैश्या च क्षत्त्रियस्य विधीयते ॥**
**वैश्यैव भार्य्या वैश्यस्य शूद्रा शूद्रस्य कीर्तिता ॥७॥**

ब्राह्मणले ब्राह्मणी, क्षत्रिया र वैश्यासँग विवाह गर्न सक्दछ । क्षत्रिणी र वैश्यासँग क्षत्रियले विवाह गर्ने विधान छ । वैश्यको वैश्य-कन्यामात्र र शूद्रको शूद्र-कन्यामात्र पत्नी हुनसक्ने विधान छ ।

**आपद्यपि न कर्तव्या शूद्रा भार्य्या द्विजन्मना ।**
**तस्यां तस्य प्रसूतस्य निष्कृतिर्न विधीयते ॥८॥**

आपदमा पनि द्विजले शूद्र कन्यालाई पत्नी नबनाउनू किन कि त्यसबाट जन्मने सन्तानका

लागि प्रायश्चितको कुनै विधान नै छैन ।

**तपस्वी यज्ञशीलश्च सर्वधर्मभृतां वरः ।**
**ध्रुवं शुद्रत्वमाप्नोति शूद्रश्राद्धे त्रयोदशे ॥९॥**

तपस्वी, यज्ञशील र धर्मपालकमा सर्वोत्तम व्यक्ति पनि यस्ता शूद्रपुत्रले
गरेको तेह्र श्राद्ध प्राप्त भएपछि शूद्रत्वमा पुग्दछ ।

**नीयते तु सपिण्डत्वं येषां श्राद्धं कुलोद्गतम् ।**
**सर्वे शूद्रत्वमायान्ति यदि स्वर्गजितास्तु ते ॥१०॥**

ती सपिण्डीहरु जसको कुल परंपरामा यस्ता शूद्रपुत्रबाट श्राद्ध गरिन्छ चाहे
आफ्नो कर्मले स्वर्गै जितेका किन नहुन् सबैले शूद्रत्व प्राप्त गर्दछन् ।

**सपिण्डीकरणं कार्यं कुलजस्य तथा ध्रुवम् ।**
**श्राद्धं द्वादशकं कृत्वा श्राद्धे प्राप्ते त्रयोदशे ॥११॥**
**सपिण्डीकरणे चार्हे न च शूद्रस्तमर्हति ।**
**तस्मात् सर्वप्रयत्नेन शूद्रां भार्य्यां विवर्जयेत् ॥१२॥**

आफ्ना मरेका स्वजनका लागि कुल परंपरा अनुसार बाह्र मासिक श्राद्ध गरिसकेपछि जब तेह्रौं श्राद्ध गर्नुपर्ने हुन्छ तब सपिण्डीकरण श्राद्ध पनि गर्नुपर्ने हुन्छ । शूद्र कन्याबाट जन्मेको पुत्रलाई यो श्राद्ध गर्ने अधिकार हुँदैन । यसैले सबै प्रयत्न गरेर शूद्र कन्यालाई पत्नी बनाउने काम छाड्नू ।

**पाणिर्ग्राह्यः सवर्णासु गृह्णीतात्क्षत्रिया शरम् ।**
**वैश्या प्रतोदमादद्याद्वेदले त्वग्रजन्मनः ॥१३॥**

समजातीय विहेमा पाणि(हात)ग्रहण गर्नू । उच्च जाति सँगको बिहेमा छेत्रिनीले वाण र वैश्याले कोर्रा समाउनु पर्दछ ।

**सा भार्य्या या वहेदग्निं सा भार्य्या या पतिव्रता ।**
**सा भार्य्या या पतिप्राणा सा भार्य्या या प्रजावती ॥१४॥**

पत्नी ती हुन् जो पतिसँगै यज्ञमा सहभागी हुन्छिन्, पत्नी तिनी हुन् जो पतिव्रता छिन्, जसलाई पति प्राणभन्दा प्यारा हुन्छन् र जो सन्तानवती हुन्छिन् ।

**लालनीया सदा भार्य्या ताडनीया तथैव च ।**
**लालिता ताडिता चैव स्त्री श्रीर्भवति नान्यथा ॥१५॥**

पत्नी सधैँ माया र पिटाइका लायक हुन्छन् । मायाले र तह लगाउनाले नै स्त्री लक्ष्मी बन्दछे अरु कुराले होइन ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे चतुर्थोऽध्यायः ॥४॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
चौथो अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-३५+१५=५०



शुरुदेखिको श्लोक सङ्ख्या : ५०



## ॥ अथ पञ्चमोऽध्यायः ॥
## (पाँचौँ अध्याय)
## अथ पञ्चमयायज्ञाः, गृहाश्रमिणां प्रशंसातिथिवर्णनञ्च ।
## (पञ्च यज्ञ, गृहस्थाश्रमको प्रशंसा आदि)

**पञ्चसूना गृहस्थस्य चुल्ली पेषण्युपस्करः ।**
**कण्डनी चोदकुम्भश्च तस्य पापस्य शान्तये ॥१॥**

गृहस्थका घरमा पाँच वध्यस्थल हुन्छ-चुलो, सिलौटो, कुचो, ओखल र जलघडा । त्यो पाप नाश गर्न ...।

**पञ्चयज्ञविधानञ्च गृही नित्यं न हापयेत् ।**
**पञ्चयज्ञ विधानेन तत्पापं तस्य नश्यति ॥२॥**

गृहस्थले कहिल्यै पञ्चयज्ञको विधानलाई नत्याग्नू । उसको त्यो पाप पञ्चयज्ञ गर्नाले नाश हुन्छ ।

**देवयज्ञो भूतयज्ञः पितृयज्ञस्तथैव च ।**
**ब्रह्मयज्ञो नृयज्ञश्च पञ्च यज्ञा प्रकीर्तिताः ॥३॥**

देवयज्ञ, भूतयज्ञ, पितृयज्ञ तथा ब्रह्मयज्ञ, नृयज्ञ-यिनलाई पञ्चयज्ञ भनी जान्नू ।

**होमो दैवो बलिर्भौतः पित्र्यः पिण्डक्रिया स्मृतः ।**
**स्वाध्यायो ब्रह्मयज्ञश्च नृयज्ञोऽतिथिपूजनम् ॥४॥**

होमलाई देवयज्ञ, बलिकर्मलाई भूतयज्ञ, पिण्डकर्मलाई पितृयज्ञ, वेद अध्ययनलाई ब्रह्मयज्ञ र अतिथि पूजालाई नृयज्ञ भनिन्छ ।

**वानप्रस्थो ब्रह्मचारी यतिश्चैव तथा द्विजः ।**
**गृहस्थस्य प्रसादेन जीवन्त्येते यथाविधि ॥५॥**

वानप्रस्थी, ब्रह्मचारी, सन्यासी र ब्राह्मण : यी सबै गृहस्थका कृपाले बाँच्दछन् ।

**गृहस्थ एव यजते गृहस्थस्तप्यते तपः ।**
**दाता चैव गृहस्थः स्यात्तस्माच्छ्रेष्ठो गृहाश्रमी ॥६॥**

गृहस्थ नै यज्ञ गर्दछ । गृहस्थले तप गर्दछ । गृहस्थ नै दान दिन्छ । त्यसैले गृहस्थी उत्तम हुन्छ ।

**यथा भर्ता प्रभुः स्त्रीणां वर्णानां ब्राह्मणो यथा ।**
**अतिथिस्तद्वदेवास्य गृहस्थस्य प्रभुः स्मृतः ॥७॥**

जसरी पति नै स्त्रीको स्वामी हुन्छ, ब्राह्मण नै वर्णको स्वामी हुन्छ त्यसरी नै अतिथिलाई यो गृहस्थीको स्वामी मानिएको छ ।

**न व्रतैर्नोपवासैश्च धर्मेण विविधेन च ।**
**नारी स्वर्गमवाप्नोति प्राप्नोति पतिपूजनात् ॥८॥**

नारीले न व्रतले, न उपवासले तथा नत अनेक थरी धर्म गरी स्वर्ग पाउँदछे, उसले त पतिपूजा गर्नाले स्वर्ग पाउँदछे ।

**न व्रतैर्नोपवासैश्च न च यज्ञैः पृथग्विधैः ।**
**राजा स्वर्गमाप्नोति प्राप्नोति परिपालनात् ॥९॥**

व्रतले, उपवासले, अनेक प्रकारका यज्ञले नभई प्रजाको
राम्रो परिपालनले राजाले स्वर्ग पाउँदछ ।

**न स्नानेन न होमेन नैवाग्निपरितर्पणात् ।**
**ब्रह्मचारी दिवं याति स याति गुरुपूजनात् ॥१०॥**

नुहाउनाले, होम गर्नाले र अग्निको पूजा गर्नाले नभई गुरुको पूजा गर्नाले
ब्रह्मचारीले स्वर्ग पाउँदछ ।

**नाग्निशुश्रूषया क्षमन्त्या स्नानेन विविधेन च ।**
**वानप्रस्थो दिवं याति याति भोजनवर्जनात् ॥११॥**

अग्निपूजा, सहनशीलता, विविध प्रकारका स्नानले नभई
उपवासले वानप्रस्थीले स्वर्ग पाउँदछ ।

**न भैक्षैर्न च मौनेन शून्यागाराश्रयेण च ।**
**यतिः सिद्धिमवाप्नोति योगेनाऽऽप्नोत्यनुत्तमाम् ॥१२॥**

भिक्षाटन गरेर, मौन रहेर र एकान्तवासले नभई सन्यासीले योगले नै श्रेष्ठ सिद्धि पाउँदछ ।

**न यज्ञैर्दक्षिणाभिश्च वह्निशुश्रूषया न च ।**
**गृही स्वर्गमवाप्नोति यथा चातिथिपूजनात् ॥१३॥**

गृहस्थले अतिथि पूजागरी जसरी स्वर्ग प्राप्त गर्दछ त्यसरी स्वर्ग प्राप्त गर्न उसले
न यज्ञले सक्दछ, न दक्षिणाले सक्दछ न त अग्नि-सेवाले नै सक्दछ ।

**तस्मात् सर्वप्रयत्नेन गृहस्थोऽतिथिमागतम् ।**
**आहारशयनाद्येन विधिवत् परिपूजयेत् ॥१४॥**

यसैले सबै प्रयत्न गरी गृहस्थले (घरमा) आएका अतिथिलाई भोजन,
शयन आदिले विधिपूर्वक पूजा गर्नू ।

**सायं प्रातश्च जुहुयादग्निहोत्रं यथाविधि ।**
**दर्शश्च पौर्णमासश्च जुहुयात् विधिवत् तथा ॥१५॥**

विहानबेलुकी विधिपूर्वक अग्निहोत्र गर्नू तथा दर्श (औंसीमा गरिने) र पौर्णमास (पूर्णिमामा गरिने) यज्ञको विधिवूर्वक यजन गर्नू ।

**यज्ञेर्वा पशुबन्धैश्च चातुर्मास्यैस्तथैव च ।**
**त्रैवार्षिकाधिकान्नेन पिबेत् सोममतन्द्रित ॥१६॥**

गृहस्थका घरमा यदि तीन वर्ष वा त्योभन्दा बढी समयलाई पुग्ने अन्न छ भने उसले अश्वमेध आदि पशुबन्ध यज्ञ, चातुर्मास्य आदि यज्ञ र अरु यज्ञ गरी आलस्य रहित भएर सोमपान गर्नू ।

**इष्टिं वैश्वानरीं कुर्य्यात्तथा चाल्पधनो द्विजः ।**
**न भिक्षेत धनं शूद्रात् सर्वं दद्यादभीप्सितम् ॥१७॥**

थोरै धनसम्पत्ति हुने द्विजले वैश्वानरी यज्ञ गर्नू । शूद्रसँग धन नमाग्नू बरु उसले जेजति चाहन्छ उसलाई दिनू ।

**वृत्तिन्तु न त्यजेद्विद्वानृत्विजं पूर्वमेव तु ।**
**कर्मणा जन्मना शुद्धं विधिना च वृणीत तम् ॥१८॥**

विद्वानले आजीविकाको पेसा नत्याग्नू र परंपरागत ऋत्विक्लाई पनि नत्याग्नू । कर्म र जन्मले शुद्ध ऋत्विक्को विधिपूर्वक वरण गर्नू ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे पञ्चमोऽध्यायः ॥५॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
पाँचौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-५०+१८=६८



शुरुदेखिको श्लोक सङ्ख्या : ६८



## ॥ अथ षष्ठोऽध्यायः ॥
## (छैटौं अध्याय)
## अथ वानप्रस्थधर्मनिरूपणं संन्यासधर्मप्रकरणञ्च ।
## (वानप्रस्थ र सन्यास धर्म)

**गृहस्थस्तु यदा पश्येद्वलीपलितमात्मनः ।**
**अश्चयस्यैव चाश्चयं तदाऽरण्यं समाश्रयेत् ॥१॥**

गृहस्थीले आफ्नु मुख चाउरी परेको तथा कपाल फुलेको देखेपछि
तथा छोराको छोरा जन्मेपछि वानप्रस्थ बन्नू ।

**पुत्रेषु दारान्निक्षिप्य तया वाऽनुगतो वनम् ।**
**अग्नीनुपचरेन्नित्यं वन्यमाहारमाहरेत् ॥२॥**

छोराको जिम्मामा पत्नीलाई छाडी वा हेरचाह गर्न लगाएर बनमा जानू । नित्य अग्निको सेवा गर्नू र खानको लागि वनमा उब्जने आहार खोजेर लेराउनू ।

**यदाहारो भवेत्तेन पूजयेत् पितृदेवताः ।**
**तेनैव पूजयेन्नित्यमतिथिं समुपागतम् ॥३॥**

वनमा यसरी खोजेर जेजति खानेकुरा भेटिन्छ त्यसले देवता र पितृलाई पूजा गर्नू र त्यसैले नै आएका अतिथिको पनि नित्य पूजा गर्नू ।

**ग्रामादाहृत्य चाश्नीयादष्टौ ग्रासान् समाहितः ।**
**स्वाध्यायञ्च सदा कुर्य्याज्जटाश्च बिभृयात्तथा ॥४॥**

गाउँबाट आठ गाँस भिक्षा मागेर लेराई संयमित भई खानू ।
सधैं वेदआदि पढ्नू र टाउकोमा जटा पाल्नू ।

**तपसा शोषयेन्नित्यं स्वकञ्चैव कलेवरम् ।**
**आर्द्रवासास्तु हेमन्ते ग्रीष्मे पञ्चतपास्तथा ॥५॥**

नित्य तप गरी आफ्नो शरीर सुकाउनू । जाडोमा (हेमन्त) चिसो
लुगा लगाउनू तथा गर्मीमा (ग्रीष्म) पञ्चाग्नि ताप्नू ।

**प्रावृष्याकाशशायी स्यान्नक्ताशी च सदा भवेत् ।**
**चतुर्थकालिको वा स्यात् षष्ठकालिक एव वा ॥६॥**

वर्षाकालमा खुला आकाश मुनी सुत्नू । सधैं रातमा भोजन गर्नू वा चौथो कि छैटौं कालमा भोजन गर्नू ।

**कृच्छ्रैर्वाऽपि नयेत् कालं ब्रह्मचर्य्यञ्च पालयेत् ।**
**एवं नीत्वा वने कालं द्विजो ब्रह्माश्रमी भवेत् ॥७॥**

अथवा कष्ट सहँदै आफ्नो समय बिताउनू । ब्रह्मचर्यको पालना गर्नू ।
यसरी वनमा समय बिताएर ब्रह्माश्रमी (सन्यासी) हुनू ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे षष्ठोऽध्यायः ॥६॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
छैटौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-६८+७=७५



शुरुदेखिको श्लोक सङ्ख्या : ७५



## ॥ अथ सप्तमोऽध्यायः ॥
## (सातौं अध्याय)
## अथ प्राणायामलक्षणधारणध्यानयोगनिरूपणवर्णनम् ।
## (योग र प्राणायाम)

**कृत्वेष्टिं विधिवत् पश्चात् सर्ववेदसदक्षिणाम् ।**
**आत्मन्यग्नीन् समारोप्य द्विजो ब्रह्माश्रमी भवेत् ॥१॥**

यसपछि सबै खालका धन दक्षिणा दिने यज्ञहरू विधिपूर्वक गरी अग्निलाई आफूभित्र समारोपण गरी द्विजले सन्यासी हुनू ।

**विधूमे न्यस्तमुसले व्यङ्गारे भुक्तवर्जने ।**

अतीते पादसम्पाते नित्यं भिक्षां यतिश्चरेत् ॥२॥

जब गाउँलेका घरघरबाट धुवाँ निस्कन बन्द हुन्छ, जब धान आदि कुटिसकेर ओखल, मुसल आदि एकातिर थन्क्याइ सकिएको हुन्छ, जब चुल्होको आगो निभाइन्छ, जब सबैले खाना खाइ सक्दछन् र जब गाउँलेहरू यताउता घुमफिर गर्न बन्द गरिसक्दछन् तब सन्यासी नियमित भिक्षा माग्न गाउँमा जानू ।

सप्तागारांश्चरेद्भैक्षं भिक्षितं नानुभिक्षयेत् ।
न व्यथेत तथाऽलाभे यथालब्धेन वर्तयेत् ॥
नाऽऽस्वादयेत्तथैवान्नं नाश्नीयात् कस्यचिद्गृहे ॥३॥

सात घरमा भिक्षा माग्नू, पहिले भिक्षा लिइसकेको घरमा फेरी भिक्षा नमाग्नू, भिक्षा नपाउँदा दुःखी नहुनु, जति पाइन्छ त्यसैले काम चलाउनू, खाना धेरै स्वादिलो नबनाउनू र अरु कसैका घरमा गएर पनि नखानू ।

मृण्मयालाबुपात्राणि यतीनान्तु विनिर्दिशेत् ।
तेषां सम्मार्जनाच्छुद्धिरद्भिश्चैव प्रकीर्तिता ॥४॥

सन्यासीका लागि माटाका वा लौका आदिले बनेका भाँडा प्रयोग गर्ने बिधान छ ।
ती क्रमशः माभेर र जलले धोएर शुद्ध हुन्छन् ।

कौपिनाच्छादनं वासो बिभृयादव्यथश्चरन् ।
शून्यागारनिकेतः स्याद्यत्रसायगृहो मुनिः ॥५॥

दुःख नमानी घुमिरहने ती सन्यासीले गुप्ताङ्ग ढाक्ने खालका सामान्य वस्त्र मात्र लगाउनू ।
एकान्तस्थलमा बस्नू । डुल्दै जाँदा जहाँ साँझ पर्दछ त्यहीँ मुनिको घरवास हुन जान्छ ।

दृष्टिपूतं न्यसेत् पादं वस्त्रपूतं जलं पिबेत् ।
सत्यपूतां वदेद्वाचं मनःपूतं समाचरेत् ॥६॥

दृष्टिले पवित्र भएका चरण टेक्नू (बाटो हेरेर हिँड्नू), कपडाले छानेर पानी पिउनू, सत्यले पवित्र गरिएका वचन बोल्नू र मनले पवित्र मानेका आचरण गर्नू ।

वन्दनैर्लिप्यतेऽङ्गं वा भस्मचूर्णैर्विगर्हितैः ।

**कल्याणमप्यकल्याणं तयोरेव न संश्रयेत् ॥७॥**

शरीरमा चन्दन दलिएको होस् वा धूलो र खरानी, चाहे कल्याण होस् वा नहोस्, दुवै थोकमा आशक्ति नगर्नू ।

**सर्वभूतहितो मैत्र समलोष्टाश्मकाञ्चनः ।**
**ध्यानयोगरतो नित्यं भिक्षुर्यायात् परां गतिम् ॥८॥**

प्राणीमात्रको हित चाहने, मैत्रीभाव राख्ने, माटोको डल्लो र सुनमा समान भाव राख्ने अनि नित्य ध्यानमा लीन हुने भिक्षु मोक्ष हुन्छ ।

**जन्मना यस्तु निर्विण्णो मरणेन तथैव च ।**
**आधिभिर्व्याधिभिश्चैव तं देवा ब्राह्मणं विदुः ॥९॥**

जो जन्म र मृत्युका कारणले वा मानसिक र शारीरिक रोगका कारणले वैरागिएको छ उसैलाई विद्वानहरू ब्राह्मण भन्दछन् ।

**अशुचित्वं शरीरस्य प्रियस्य च विपर्ययः ।**
**गर्भवासे च वसतिस्तस्मान्मुच्येत नान्यथा ॥१०॥**

शरीरको अपवित्रता, दुःख, र गर्भवासका दृष्टिले मानिस यो भवसंसारबाट मुक्त हुन सक्दछ, नत्र सक्दैन ।

**जगदेतन्निरात्रन्दं न तु सारमनर्थकम् ।**
**भोक्तव्यमिति निर्विष्णो मुच्यते नात्र संशयः ॥११॥**

यो संसार मोक्ष (वा रक्षा) हीन छ । यसमा कुनै सार छैन । यो अनर्थक छ । तर पनि यसलाई भोग्नु नै पर्दछ । यही सोचेर जो वैरागिन्छ, उ मुक्त हुन्छ । यसमा कुनै शङ्का छैन ।

**प्राणायामैर्दहेद्दोषान् धारणाभिश्च किल्बिषम् ।**
**प्रत्याहारैरसत्सङ्गान् ध्यानेनानीश्वरान् गुणान् ॥१२॥**

प्राणायामले दोषलाई, मनको एकाग्रताले पापलाई, इन्द्रियनिग्रहले खराबीलाई र ध्यानले अईश्वरीय गुणलाई भस्म पारि दिनू ।

**सव्याहृतिं सप्रणवां गायत्रीं शिरसा सह ।**
**त्रिः पठेदायतप्राणः प्राणायामः स उच्यते ॥१३॥**

श्वासलाई रोकी प्रणव, व्याहृति र शिरोमन्त्रका साथ गायत्रीको तीन पटक गरिने जपलाई प्राणायाम भनिन्छ ।

**मनसः संयमस्तज्ज्ञैर्धारणेति निगद्यते ।**
**संहारश्चेन्द्रियाणाञ्च प्रत्याहारः प्रकीर्तितः ॥१४॥**

मनलाई संयमित बनाउनुलाई योगका जानकारहरुले “धारणा” भनी बताएका छन् । यसैगरी इन्द्रियलाई तिनको विषयबाट तानेर वशमा पार्नुलाई “प्रत्याहार” भनिएको छ ।

**हृदयस्थस्य योगेन देवदेवस्य दर्शनम् ।**
**ध्यानं प्रोक्तं प्रवक्ष्यामि ध्यानयोगमतः परम् ॥१५॥**

योग मार्फत हृदयमा रहेका देवताका पनि देवताको चिन्तन गर्नुलाई ध्यान भनिएको छ । यसपछि म ध्यान-योगका बारेमा बताउने छु ।

**हृदिस्था देवता सर्वा हृदि प्राणा प्रतिष्ठिताः ।**
**हृदि ज्योतींषि सूर्यश्च हृदि सर्वं प्रतिष्ठितम् ॥१६॥**

सबै देवता हृदयमा रहेका हुन्छन्, प्राण पनि हृदयमै जमेर बसेको हुन्छ, सबै ज्योति र सूर्य पनि हृदयमै रहेका हुन्छन् । सबै कुरा हृदयमै रहेका हुन्छन् ।

**स्वदेहमरणिं कृत्वा प्रणवञ्चोत्तरारणिम् ।**
**ध्याननिर्मथनाभ्यान्तु विष्णुं पश्येद्धृदिस्थितम् ॥१७॥**

आफ्नो शरीरलाई तलको अरणि र ॐ कारलाई माथिको अरणि बनाई ध्यानका लागि उपयुक्त यी दुवै मदानी मार्फत हृदयमा रहेका सर्वव्यापी ईश्वरको मन्थन (ध्यान) गर्नू ।

**हृद्यर्कश्चन्द्रमाः सूर्य्यः सोमो मध्ये हुताशन ।**
**तेजोमध्ये स्थितं तत्त्वं तत्त्वमध्ये स्थितोऽच्युतः ॥१८॥**

हृदयमा सूर्य र चन्द्र रहेका हुन्छन्, तिनको बीचमा अग्नि रहेको हुन्छ, अग्निको बीचमा तत्त्व र तत्त्वको बीचमा अविनाशी ईश्वर रहेका हुन्छन् ।

**अणोरणीयान् महतो महीयानात्मास्य जन्तोर्निहितो गुहायाम् ।**
**तेजोमयं पश्यति वीतशोको धातु प्रसादान्महिमानमात्मनः ॥१९॥**

सूक्ष्मभन्दा पनि सूक्ष्म र विशालभन्दा पनि विशाल प्राणीको आत्मा यही हृदयरूपी गुफामा रहेको हुन्छ । ईश्वरको कृपाले नै शोकरहित भई मानिस यो आत्माको तेजोमय महिमालाई देख्न सक्दछ ।

**वासुदेवस्तमोऽन्धानां प्रत्यक्षो नैव जायते ।**
**अज्ञानपटसंवीतैरिन्द्रियैर्विषयेप्सुभिः ॥२०॥**

अज्ञानरूपी पर्दाले ढाकिएका एवं आआफ्ना विषयको चाहना गर्ने इन्द्रियका अज्ञानबाट जेलिएका मानिसलाई भगवान् वासुदेवको दर्शन हुँदैन ।

**एष वै पुरुषो विष्णुर्व्यक्ताव्यक्तः सनातनः ।**
**एष धाता विधाता च पुराणो निष्कलः शिवः ॥२१॥**

यो हृदयरूपी नगरीमा बस्ने आत्मा नै सर्वव्यापक परमेश्वर एवं व्यक्त, अव्यक्त एवं सनातन ब्रह्म हो । यही नै धाता र विधाता हो । यो प्राचीनतम, कलारहीत र कल्याणकारी हुन्छ ।

**वेदाहमेतं पुरुषं महान्तं आदित्यवर्णं तमसः परस्तात् ।**
**मन्त्रैर्विदित्वा न बिभेति मृत्योर्नान्य पन्था विद्यतेऽयनाय ॥२२॥**

म ती महान् अमृत पुरुषलाई जान्दछु जो सूर्यसमान तेजिला वर्णका र अन्धकारभन्दा पर छन् । मन्त्रमार्फत् उनलाई जानेर मानिस मृत्युसँग पनि डराउन छाड्दछ । मोक्षका लागि यसबाहेक अरु कुनै बाटो छैन ।

**पृथिव्यापस्तथा तेजो वायुराकाशमेव च ।**
**पञ्चेमानि विजानईीन्महाभूतानि पण्डितः ॥२३॥**

पण्डितजनले पृथ्वी, जल, अग्नि, वायु र आकाश : यी पाँचलाई पञ्चमहाभूत भनी बताएका छन् ।

**चक्षुःश्रोत्रे स्पर्शनञ्च रसना घ्राणमेव च ।**
**बुद्धीन्द्रियाणि जानईात् पञ्चेमानि शरीरके ॥२४॥**

आँखा, कान, छाला, जिब्रो र नाक शरीरका यी पाँच ज्ञानेन्द्रियलाई जान्नू ।

**शब्दो रूपं तथा स्पर्शो रसो गन्धस्तथैव च ।**
**इन्द्रियस्थान् विजानीयात् पञ्चैव विषयान् बुधः ॥२५॥**

ज्ञानीले शब्द, स्पर्श, रूप, रस र गन्ध गरी इन्द्रियसँग सम्बन्धित यी पाँच विषयलाई जान्नू ।

**हस्तौ पादावुपस्थञ्च जिह्वा पायुस्तथैव च ।**
**कर्मेन्द्रियाणि पञ्चैव नित्यमस्मिन् शरीरके ॥२६॥**

दुई हात, दुई गोडा, जननेन्द्रिय, मुख र मलमूत्र विसर्जन गर्ने अङ्ग-यी
नित्य नै शरीरका पाँच कर्मेन्द्रिय हुन् ।

**मनो बुद्धिस्तथैवाऽऽत्मा व्यक्ताव्यक्तं तथैव च ।**
**इन्द्रियेभ्यः पराणीह चत्वारि प्रवराणि च ॥२७॥**

मन, बुद्धि, आत्मा तथा व्यक्त-अव्यक्त प्रकृति-यी चार कुराहरु
इन्द्रिय भन्दा परका र श्रेष्ठ हुन् ।

**चतुर्विंशत्यिथैतानि तत्त्वानि कथितानि च ।**
**तथाऽऽत्मानं तद्व्यतीतं पुरुषां पञ्चविंशकम् ॥**
**तत्तु ज्ञात्वा विमुच्यन्ते ये जनाः साधुवृत्तयः ॥२८॥**

जम्मा चौबीस तत्व बताइएका छन् । यसबाहेक परमात्मा वा पुरुष पच्चीसौं तत्व हो । जो श्रेष्ठ पुरुष छन् ती यो कुरा जानेर मोक्ष हुन्छन् ।

**इदन्तु परमं गुह्यमेतदक्षरमुत्तमम् ।**
**अशब्दरसमस्पर्शमरूपं गन्धवर्जितम् ॥२९॥**

यो ब्रह्म अति गोप्य, अक्षर र उत्तम छ । यो बिना शब्दको र बिना रसको,

बिना स्पर्शको, बिना रूपको र बिना गन्धको छ ।

**निदुःखमसुखं शुद्धं तद्विष्णौः परमं पदम् ।**
**अजं निरञ्जनं शान्तमव्यक्तं ध्रुवमक्षरम् ॥३०॥**
**अनादिनिधनं ब्रह्म तद्विष्णोः परमं पदम् ।**
**विज्ञानसारथिर्यस्तु मनप्रग्रहबन्धनः ॥३१॥**
**सोऽध्वनः पारमाप्नोति तद्विष्णो परमं पदम् ।**

सुख र दुःख नहुने जुन स्थान छ त्यही नै विष्णुको परम पद हो । त्यो पद कहिल्यै नजन्मने, बेदाग, शान्त, व्यक्त गर्न नसकिने, साश्वत र अविनाशी छ । जो जन्म र मरण नभएको ब्रह्म हो, त्यही नै विष्णुको परम पद हो । जो बुद्धिलाई सारथि बनाई मनलाई नियन्त्रण गर्दछ उसले यो जीवनभन्दा उता (पर) रहेको विष्णुको त्यो परम पदलाई प्राप्त गर्दछ ।

**बालाग्रशतशो भागः कल्पितस्तु सहस्रधा ।**
**तस्यापि शतशो भागाज्जीवः सूक्ष्म उदाहृतः ॥३२॥**

कपालको टुप्पोलाई सय भाग लाएर त्यसलाई फेरी हजार भाग लगाई फेरी त्यसको सय भाग गर्दा जति वा जत्रो हुन्छ जीवलाई त्यसभन्दा पनि सूक्ष्म भनी बताइएको छ ।

**इन्द्रियेभ्यः परा ह्यर्था अर्थेभ्यश्च परं मनः ।**
**मनसस्तु परा बुद्धिर्बुद्धेरात्मा महान् परः ॥३३॥**
**महतः परमव्यक्तमव्यक्तात् पुरुषः परः ।**
**पुरुषान्न परं किञ्चित् सा काष्ठा सा परा गति ॥३४॥**

इन्द्रियहरूभन्दा विषय पर (श्रेष्ठ, टाढा) छ, विषयभन्दा पर मन छ, मनभन्दा बुद्धि पर छ, बुद्धिभन्दा महान् तत्व पर छ, महान् तत्वभन्दा अव्यक्त प्रधान पर छन् अनि अव्यक्तभन्दा ब्रह्म पर छन् । पुरुष (ब्रह्म) भन्दा पर केही छैन । यही नै अन्तिम सीमा हो र परमगति वा मोक्ष भनेको पनि यही हो ।

**एषु सर्वेषु भूतेषु तिष्ठत्यविरलः सदा ।**
**दृश्यते त्वग्य्रया बुद्धया सूक्ष्मया सूक्ष्मदर्शिभिः ॥३५॥**

त्यो सबै जीवमा अविरलरूमा सधैं रहने गर्दछ र सूक्ष्मदर्शीहरूबाट उत्तम एवं सूक्ष्म बुद्धि मार्फत देखिने गर्दछ ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे सप्तमोऽध्यायः ॥७॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
सातौँ अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-७५+३५=११०



शुरुदेखिको श्लोक सङ्ख्या : ११०



## ॥ अथाष्टमोऽध्यायः ॥
## (आठौँ अध्याय)
## । अथ नित्यनैमित्तिकादिस्नानानां लक्षणवर्णनम् ।
## (स्नान)

**नित्यं नैमित्तिकं काम्यं क्रियाङ्गं मलकर्षणम् ।
क्रियास्नानं तथा षष्ठं षोढा स्नानं प्रकीर्तितम् ॥१॥**

नित्य, नैमित्तिक, काम्य, क्रियाङ्ग, मलकर्षण, र छैटौँ क्रियास्नान-यी छ प्रकारका स्नान बताइएको छ ।

**अस्नातः पुरुषोऽनर्हो जप्याग्निहवनादिषु ।
प्रातः स्नानं तदर्थं च नित्यस्नानं प्रकीर्तितम् ॥२॥**

ननुहाइकन मानिस जप र होम आदिको लागि योग्य हुँदैन । त्यसको लागि सधैँ बिहान नुहाउनु पर्दछ । यसलाई 'नित्य' स्नान भनिन्छ ।

**चण्डालशवपूयाद्यं स्पृष्ट्वा स्नानं रजस्वलाम् ।
स्नानानर्हस्तु यः स्नाति स्नानं नैमित्तिकं च तत् ॥३॥**

चण्डाल, लाश, पीप, परसरेकी आईमाई आदिलाई छुनाले गर्दा नुहाउन नपर्ने मानिसले पनि नुहाउनु पर्दछ र त्यसलाई 'नैमित्तिक' स्नान भनिन्छ ।

**पुण्यस्नानादिकं स्नानं दैवज्ञविधिचोदितम् ।**

**तद्धि काम्यं समुद्दिष्टं नाकामस्तत्प्रयोजयेत् ॥४॥**

ज्योतिषीहरुले विधिपूर्वक विधान गरेको पुष्य आदि नक्षत्रमा गरिने स्नानलाई 'काम्य' भनी बताइएको छ । कामना नचाहनेले यो स्नान नगर्नू ।

**जप्तुकामः पवित्राणि अर्चिष्यन् देवताः पितृन् ।**
**स्नानं समाचरेद्यस्तु क्रियाङ्गं तत्प्रकीर्तितम् ॥५॥**

पवित्र नामक मन्त्र जपको चाहना गर्दा तथा देवता वा पितृलाई आराधना गर्दै रहँदा मानिसले जुन स्नान गर्दछ त्यसलाई 'क्रिया स्नान' भनिएको छ ।

**मलापकर्षणार्थं तु स्नानमभ्यङ्गपूर्वकम् ।**
**मलापकर्षणार्थाय प्रवृत्तिस्तस्य नान्यथा ॥६॥**

मैलो हटाउन सुगन्ध, तेल आदिले मालिस गरी जुन स्नान गरिन्छ त्यसलाई 'मलापकर्षण स्नान' भनिन्छ । यो मैलो हटाउनका लागि नै गरिन्छ अरु उद्देश्यले होइन ।

**सरित्सु देवखातेषु तीर्थेषु च नदीषु च ।**
**क्रियास्नानं समुद्दिष्टं स्नानं तत्र महाक्रिया ॥७॥**

'क्रियास्नान' नदी, देवकुण्ड, तीर्थ र नदीमा गरिन्छ किनकि त्यस्तो स्नान उत्तम स्नान-कर्म हो ।

**तत्र काम्यं नु कर्तव्यं यथावद्विधिचोदतम् ।**
**नित्यं नैमित्तिकं चैव क्रियाङ्गं मलकर्षणम् ॥८॥**

काम्य, नित्य, नैमित्तिक, क्रियाङ्ग र मलकर्षण जस्ता विधान गरिएका स्नान पनि यथावतरूपले गर्नूपर्दछ ।

**तीर्थाभावे तु कर्त्तव्यमुष्णोदकपरोदकैः ।**
**स्नानं तु वह्नितप्तेन तथैव परवारिणा ॥९॥**

तीर्थको अभावमा आगोमा तताएको तातो पानीले वा अरुले लेराएको पानीले नुहाउनु पर्दछ ।

**शरीरशुद्धिर्विज्ञेया न तु स्नानफलं लभेत् ।**

**अद्भिर्गात्राणि शुध्यन्ति तीर्थस्नानात्फलं लभेत् ॥१०॥**

यो नुहाईले शरीर शुद्धि मात्र हुन्छ भनी जान्नू । यस्तो स्नानले स्नानफल प्राप्त हुँदैन, शरीर मात्र शुद्ध हुन्छ । तीर्थस्नान गर्नाले फलप्राप्त हुन्छ ।

**सरःसु देवखातेषु तीर्थेषु च नदीषु च ।**
**स्नानमेव क्रिया तस्मात्स्नानात्पुण्यफलं स्मृतम् ॥११॥**

देवताद्वारा खनिएका पोखरी, तीर्थ र नदीमा गरिने स्नान नै उत्तम स्नान हो । त्यस्तो स्नानले पुण्य प्राप्त हुन्छ भनिएको छ ।

**तीर्थं प्राप्यानुषङ्गेण स्नानं तीर्थे समाचरेत् ।**
**स्नानजं फलमाप्नोति तीर्थयात्राफलं न तु ॥१२॥**

मानिस कुनै मुख्य प्रयोजनको लागि गौण प्रयोजनको रुपमा कुनै तीर्थमा स्नान गर्दछ भने स्नानको फल मिल्दछ तर तीर्थयात्राको फल मिल्दैन । जस्तैः कार्यालयको काम वा ब्यापारको सिलसिलामा कुनै तीर्थमा पुगी "आइ त हालियो, नुहाइ दिउँ न त" भनेर त्यहाँ नुहाउँदछ भने उसले नुहाएको फल पाउँदछ तर तीर्थको फल पाउँदैन । अर्थात् उसले तीर्थमा नुहाएको मानिंदैन ।

**सर्वतीर्थानि पुण्यानि पापघ्नानि सदा नृणाम् ।**
**परस्परानपेक्षाणि कथितानि मनीषिभिः ॥१३॥**

सबै तीर्थ मानिसका लागि सधैं पापनाशक र पुण्यदायक हुन्छन् परस्पर अवहेलना नगर्न योग्य हुन्छन् ।

**सर्वे प्रस्रवणाः पुण्याः सरांसि च शिलोच्चयाः ।**
**नद्यः पुण्यास्तथा सर्वा जाह्नवी तु विशेषतः ॥१४॥**

सबै झरनाहरु, तलाउहरु र पर्वतहरु पुण्यदायक हुन्छन् । त्यस्तै सबै नदीहरु पुण्यदायक हुन्छन् ता पनि विशेष गरी गङ्गा पुण्यदायक हुन्छिन् ।

**यस्य पादौ च हस्तौ च मनश्चैव सुसंयतम् ।**
**विद्या तपश्च कीर्तिश्च स तीर्थफलमश्नुते ॥१५॥**

जसले आफ्ना दुवै गोडा, दुवै हात र मनलाई राम्ररी नियन्त्रणमा राखेको छ अनि जोसँग विद्या, तप र कीर्ति छ त्यसले तीर्थको फल प्राप्त गर्दछ ।

**नृणां पापकृतां तीर्थे पापस्य शमनं भवेत् ।**
**यथोक्तफलदं तीर्थं भवेच्छुद्धात्मनां नृणाम् ॥१६॥**

पापीका पाप तीर्थमा नाश हुन्छन् । पवित्र आत्मा भएका मानिसका लागि तीर्थले मनले चाहेको फल दिन्छ ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे अष्टमोऽध्यायः ॥८॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
आठौँ अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-११०+१६=१२६



शुरुदेखिको श्लोक सङ्ख्या : १२६



## ॥ अथ नवमोऽध्यायः ॥
## (नवौँ अध्याय)
## । अथ क्रियास्नानविधिवर्णनम् ।
## (क्रियास्नान विधि)

**क्रियास्नानं प्रवक्ष्यामि यथावद्विधिपूर्वकम् ।**
**मृद्भिरद्भिश्च कर्तव्यं शौचमादौ यथाविधि ॥१॥**

अब म क्रियास्नानको विधि बताउँदछु । सर्वप्रथम माटो र पानीले विधिपूर्वक शौच गर्नू पर्दछ ।

**जले निमग्न उन्मज्य उपस्पृश्य यथाविधि ।**
**तीर्थस्यावाहनं कुर्य्यात् तत्प्रवक्ष्याम्यशेषतः ॥२॥**

जलमा डुबुल्कि लगाएर बाहिर आई विधिपूर्वक आचमन गरी तीर्थको आवाहन गर्नू, यसको वर्णन अब गर्दछु ।

**प्रपद्ये वरुणं देवमम्भसां पतिमूर्जितम् ।**

**याचितं देहि मे तीर्थं सर्वपापापनुत्तये ॥३॥**

जलका शक्तिशाली स्वामी वरुण देवको शरणमा आएको छु । सबै पाप हटाउनका लागि उनले मलाई मनले सोचेको तीर्थ दिऊन् ।

**तीर्थमावाहयीष्यामि सर्व्वाघविनिषूदनम् ।**
**सान्निध्यमस्मिंस्तोये च क्रियतां मदनुग्रहात् ॥४॥**

म सबै नाश गर्ने तीर्थको आवाहन गर्दैछु । तपाईंहरु ममाथि कृपागर्न यो पानीमा उपस्थित हुनुहोस् ।

**रुद्रान् प्रपद्ये वरदान् सर्व्वानप्सुषदस्तथा ।**
**सर्व्वानप्सुषदश्चैव प्रपद्ये प्रयतः स्थितः ॥५॥**

वर दिने भएका रुद्रहरु तथा जलमा वास गर्ने अरु सबै देवताको शरणमा आउँदछु । म संयमित चित्तले जलमा वासगर्ने सबै देवताको शरणमा छु ।

**देवमप्सुषदं वह्निं प्रपद्येऽघनिषूदनम् ।**
**आपः पुण्याः पवित्राश्च प्रपद्ये शरणं तथा ॥६॥**

म जलमा बस्ने पापनाशक अग्निदेवको शरणमा आउँदछु । जल पुण्यदायक र पवित्र हुन्छ, म उनैको शरणमा आउँदछु ।

**रुद्राश्चाग्निश्च सर्पश्च वरुणस्त्वाप एव च ।**
**शमयन्त्वाशु मे पापं माञ्च रक्षन्तु सर्वशः ॥७॥**

हे रुद्र ! हे अग्नि ! हे सर्प ! हे वरुण ! तथा हे जल ! शीघ्र मेरो पाप नाश गर्नुहोस् र सबै प्रकारले मेरो रक्षा गर्नुहोस् ।

**इत्येवमुक्त्वा कर्तव्यस्ततः संमार्जनं जले ।**
**आपो हिष्ठेति तिसृभिर्यथावदनुपूर्वशः ॥८॥**

यो भनेपछि पानीमा 'आपो हिष्ठा' आदि तीन मन्त्र क्रमैले भन्दै शरीर माड्नू ।

**हिरण्यवर्णेति तिसृभिर्ज्जगतीति चतसृभिः ।**
**शं नो देवीरिति तथा शं न आपस्तथैव च ॥**
**इदमापः प्रवहते तथा मन्त्रमुदीरयेत् ॥९॥**

'हिरण्यवर्ण' आदि तीन मन्त्रले, 'जगति' आदि चार मन्त्रले माड्नू तथा 'शं नो देवीः, शं न आपः र इदमापः प्रवहते' मन्त्रहरु पाठ गर्नू ।

**एवं मन्त्रान्समुच्चार्यच्छन्दांसि ऋषिदेवताः ।**
**अघमर्षणसूक्तञ्च प्रपठेत् प्रयतः सदा ॥१०॥**

यसरी मन्त्र, तिनको छन्द, तिनका ऋषि र तिनका देवताको समेत पाठ गरेपछि संयमतापूर्वक अघमर्षण सूक्त राम्रोसँग पाठ गर्नू ।

**छन्दोऽनुष्टुप् च तस्यैव ऋषिश्चैवाघमर्षणः ।**
**देवता भाववृत्तश्च पापक्षये प्रकीर्तितः ॥११॥**

अघमर्षण सूक्तको छन्द अनुष्टुप, ऋषि अघमर्षण र देवता भाववृत्त हुन् । यो सूक्त पापनाशका लागि प्रख्यात छ ।

**ततोऽम्भसि निमग्नः स्यात् त्रिः पठेदघमर्षणम् ।**
**प्रपद्यान्मूर्द्धनि तथा महाव्याहृतिभिर्जलम् ॥१२॥**

त्यसपछि जलमा डुबुल्की लगाउनू, अघमर्षण सूक्त पाठ गर्नू र महाव्याहृति पढ्दै टाउकोमा पानी हाल्नू ।

**यथाश्वमेधः क्रतुराट् सर्वपापापनोदनः ।**
**तथाऽघमर्षणं सूक्तं सर्वपापप्रणाशनम् ॥१३॥**

जसरी ऋतृराज अश्वमेध सबै पापलाई नाश गर्ने हुन्छन् त्यसरी नै अघमर्षण सूक्त सबै पापलाई नाशगर्ने हुन्छ ।

**अनेन विधिना स्नात्वा स्नातवान् धौतवाससा ।**
**परिवर्तितवासास्तु तीर्थतीरमुपस्पृशेत् ॥१४॥**

यो विधिले नुहाएर नुहाउनेले धोइएका सफा लुगा फेर्नू र तीर्थको तीरमा बसी आचमन गर्नू ।

**उदकस्याप्रदानात्तु स्नानशाटी न पीडयेत् ।**
**अनेन विधिना स्नातस्तीर्थस्य फलमश्नुते ॥१५॥**

पितृलाई तर्पण नगर्दासम्म नुहाउँदा लगाएको धोती (आदि वस्त्र) ननिचोर्नू ।
यसरी नुहाउनेले तीर्थको फल पाउँदछ ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे नवमोऽध्यायः ॥९॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
नवौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-१२६+१५=१४१



शुरुदेखिको श्लोक सङ्ख्या : १४१



## ॥ अथ दशमोऽध्यायः ॥
## (दशौं अध्याय)
## । अथाचामनविधिवर्णनम् ।
## (आचमन विधि)

**अतः परं प्रवक्ष्यामि शुभामाचमनक्रियाम् ।**
**कायं कनिष्ठिकामूले तीर्थमुक्तं मनीषिभिः ॥१॥**

यसपछि आचमनको शुभ विधिका बारेमा बताउँदछु । कान्छी औंलाको फेदलाई
विद्वत्जनले "काय तीर्थ" भनेका छन् ।

**अङ्गुष्ठमूले च तथा प्राजापत्यं प्रकीर्त्तितम् ।**
**अङ्गुल्यग्रे स्मृतं दैवं पित्र्यं तर्जनिमूलकम् ॥२॥**

बूढी औंलाको फेदलाई "प्राजापत्य तीर्थ", औंलाहरुको टुप्पो पट्टिको भागलाई "दैव तीर्थ"
तथा चोर औंलाको फेदलाई "पितृ तीर्थ" भनी बताइएको छ ।

**प्राजापत्येन तीर्थेन त्रिः प्रमश्नीयाज्जलं द्विजः ।**
**द्विः प्रमृज्य मुखं पश्चात्खान्यद्भिः समुपस्पृशेत् ॥३॥**

द्विजले प्राजापत्य तीर्थले तीन पटक जल पिउनू । त्यसपछि दुई पटक मुख सफा गरी पानीले इन्द्रियहरु छुनू ।

**हृद्गाभिः पूयते विप्रः कण्ठगाभिस्तु भूमिपः ।**
**तालुगाभिस्तथा वैश्यः शूद्रः स्पृष्टाभिरन्ततः ॥४॥**

हृदयसम्म पुगेको जलले ब्राह्मण, कण्ठसम्म पुगेको जलले क्षत्रिय, तालुसम्म पुगेको जलले वैश्य र मुखभित्र पुगेको जलले शूद्र पवित्र हुन्छ ।

**अन्तर्जानुः शुचौ देशे प्राङ्मुखः सुसमाहितः ।**
**उदङ्मुखो वा प्रयतो दिशश्चानवलोकयन् ॥५॥**

दुवै हात घुँडा भित्र पारी, शान्तचित्तले पूर्वतिर फर्की बसेर वा संयमित भई, उत्तरतिर फर्की, अन्य दिशातर्फ नहेरी.. ।

**अद्भिः समुद्धृताभिस्तु पीनाभिः फेनबुद्बुदैः ।**
**वह्निना चाप्यतप्ताभिरक्षाराभिरुपस्पृशेत् ॥६॥**

कुवाबाट झिकिएको, फिँज र फोका नभएको, आगोले नतताइएको र नुनीलो नभएको जलले आचमन गर्नू ।

**तर्जन्यङ्गुष्ठयोगेन स्पृशेन्नासापुटद्वयम् ।**
**अङ्गुष्ठमध्यायोगेन स्पृशेन्नेत्रद्वयं ततः ॥७॥**
**अङ्गुष्ठानामिकाभ्यां तु श्रवणौ समुपस्पृशेत् ।**
**कनिष्ठाङ्गुष्ठयोगेन स्पृशेत्स्कन्धद्वयं ततः ॥८॥**

बूढी औंला र चोर औंलाले दुवै नाकका प्वाल छुनू । बूढी औंला र माझि औंला मिलाएर त्यसपछि दुवै आँखा छुनू । बूढी औंला र साहिँली औंलाले दुवै कान छुनू । त्यसपछि बूढी औंला र कान्छी औंलाले दुवै काँध छुनू ।

**सर्वासामेव योगेन नाभिं च हृदयं तथा ।**

**संस्पृशेच्च तथा मूर्ध्नि एष आचमने विधिः ॥९॥**

सबै औंला मिलाएर नाइटो, हृदय र टाउको छुनू । यो नै आचमनको विधि हो ।

**त्रिः प्राश्नीयाद्यदम्भस्तु प्रीतास्तेनास्य देवताः ।**
**ब्रह्मा विष्णुश्च रुद्रश्च भवन्तीत्यनुशुश्रुम ॥१०॥**

मानिसले तीन पटक जलले आचमन गर्दा त्यसका तीन देवता ब्रह्मा,
विष्णु र शिव खुशी हुन्छन् भनी मैले सुनेको छु ।

**गङ्गा च यमुना चैव प्रीयेते परिमार्जनात् ।**
**नासत्यदस्रौ प्रीयेते स्पृष्टे नासापुटद्वये ॥११॥**

परिमार्जन (माड्नु) ले गङ्गा र यमुना तथा दुवै नाथ्री छुनाले
नासत्य र दस्र (अश्विनीकुमार) प्रसन्न हुन्छन् ।

**स्पृष्टे लोचनयुग्मे तु प्रीयेते शशिभास्करौ ।**
**कर्णयुग्मे तथा स्पृष्टे प्रीयेते अनिलानलौ ॥१२॥**

दुवै आँखाको स्पर्शले चन्द्र र सूर्य तथा दुवै कानको स्पर्शले अग्नि र वायु प्रसन्न हुन्छन् ।

**स्कन्धयोः स्पर्शनादस्य प्रीयन्ते सर्वदेवताः ।**
**मूर्ध्नः संस्पर्शनादस्य प्रीतस्तु पुरुषो भवेत् ॥१३॥**

दववै काँधको स्पर्शले यसका सबै देवता तथा टाउकोको स्पर्शले
स्वयं परमेश्वर उ माथि प्रसन्न हुन्छन् ।

**विना यज्ञोपवीतेन यथा मुक्तशिखो द्विजः ।**
**अप्रक्षालितपादस्तु आचान्तोऽप्यशुचिर्भवेत् ॥१४॥**

जनै नलगाई, टुपी शिखा नपारी तथा गोडा नधोई आचमन गरेको
भए पनि मानिस अपवित्र नै हुन्छ ।

**बहिर्जानुरुपस्पृश्य एकहस्तार्पितैर्जलैः ।**

**सोपानत्कस्तथा तिष्ठन्नेव शुद्धिमवाप्नुयात् ॥१५॥**

घुँडा बाहिर हातराखी, एकहातमा लिइएको जलले, जुत्ता लगाएर तथा उभिएर आचमन गर्दा मानिस शुद्ध हुँदैन ।

**आचम्य च पुराप्रोक्तं तीर्थसंमार्जनं तु यत् ।**
**उपस्पृशेत्ततः पश्चान्मन्त्रेणानेन धर्मतः ॥१६॥**

उपरोक्त विधिले आचमन गरी त्यसपछि तीर्थ संमार्जन गरी अनि यो मन्त्रले धर्मपूर्वक फेरी आचमन गर्नू ।

**अन्तश्चरति भूतेषु गुहायां विश्वतोमुखः ।**
**त्वं यज्ञस्त्वं वषट्कार आपो ज्योती रसोऽमृतम् ॥१७॥**

"सबैतिर मुख भएका, प्राणीका हृदयरुपी गुफामा विचरण गर्ने हजुर यज्ञ, वषट्कार, जल, ज्योति तथा अमृत हुनुहुन्छ" ।

**आचम्य च ततः पश्चादादित्याभिमुखो जलम् ।**
**उदुत्यं जातवेदसमिति मन्त्रेण निक्षिपेत् ॥१८॥**

त्यसपछि फेरी आचमन गरेर सूर्यतिर फर्की 'उदु त्यं जातवेदसम्...' मन्त्रले जल दिनू ।

**एष एव विधिः प्रोक्तः संध्ययोश्च द्विजातिषु ।**
**पूर्वां संध्यां जपंतिष्ठेदासीनः पश्चिमां तथा ॥१९॥**

दुवै सन्ध्यामा द्विजले गर्ने सन्ध्याको विधि यही बताइन्छ कि गायत्री जप्दा बिहान उठेर र बेलुकी बसेर जप्नू ।

**ततो जपेत्पवित्राणि पवित्रं वाऽथ शक्तितः ।**
**ऋषयो दीर्घसंध्यत्वाद्दीर्घमायुरवाप्नुयुः ॥२०॥**

त्यसपछि (सूर्योपासना पछि) पवित्र नामका मन्त्रहरु वा एउटा पवित्र मन्त्र शक्ति अनुसार जप्नू । ऋषिहरुले लामोसमय सन्ध्या गर्ने भएर लामो आयू पाएका थिए ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे दशमोऽध्यायः ॥१०॥



॥ मोहन प्रसाद् सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
दशौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-१४१+२०=१६१



शुरुदेखिको श्लोक सङ्ख्या : १६१



## ॥ अथैकादशोऽध्यायः ॥
## (एघारौं अध्याय)
## । अथाघमर्षणविधिवर्णनम् ।
## (अघमर्षण विधि)

**सर्वदेवपवित्राणि वक्ष्याम्यहमतः परम् ।**
**येषां जपैश्च होमैश्च पूयन्ते मानवाः सदा ॥१॥**

यसपछि म सबै वेदका पवित्र मन्त्रको वर्णन गर्दछु । जसको जप र होमले मानिस सधैं पवित्र हुन्छ ।

**अघमर्षणं देवव्रतं शुद्धवत्यस्तु तत्समाः ।**
**कुष्माण्डयः पावमान्यश्च सावित्र्यश्च तथैव च ॥२॥**

अघमर्षण सूक्त, देवव्रत सूक्त, शुद्धवती ऋचाहरु, कुष्माण्डी ऋचाहरु, पावमानी ऋचाहरु तथा सविता देवताका ऋचाहरु,.. ।

**अभीष्टद्रुपदा चैव स्तोमानि व्याहृतीस्तथा ।**
**भारुण्डानि च सामानि गायत्री चोशनं तथा ॥३॥**

अभीष्ट द्रुपदा, स्तोम सूक्त, सात व्याहृति, भारुण्ड साम, गायत्री छन्दमा रचिएका मन्त्रहरु तथा उषना मन्त्र,.. ।

**पुरुषव्रतं भाषं च तथा सोमव्रतानि च ।**
**अब्लिङ्गं बार्हस्पत्यं च वाक्सूक्तममृतं तथा ॥४॥**

...पुरुषसूक्त, भाषासूक्त, सोमव्रत मन्त्र, जलविषयक सूक्त, बार्हस्पत्य सूक्त, वाक् सूक्त तथा अमृत सूक्त,..।

**शतरुद्रईमथर्वशिरस्त्रिसुपर्णं महाव्रतम् ।**
**गोसूक्तमश्वसूक्तं च इन्द्रसूक्तं च सामनी ॥५॥**

शतरुद्रीय, अथर्वशीर, त्रिसुपर्ण, महाव्रत, गोसूक्त, अश्वसूक्त, इन्द्रसूक्त तथा दुई साम,..।

**त्रीण्याज्यदोहानि रथन्तरं च अग्निव्रतं वामदेवव्रतं च ।**
**एतानि गीतानि पुनन्ति जन्तूञ्जातिस्मरत्वं लभते यदीच्छेत् ॥६॥**

तीन आज्यदोह, रथन्तर, अग्निव्रत तथा वामदेवव्रत यी सबै गाईँदा प्राणीहरु लाई पवित्र गर्दछन् तथा मानिसले चाहे त अमरत्व समेत प्राप्त गर्दछ ।

॥ इति श्री शाङ्खई धर्मशास्त्रे एकादशोऽध्यायः ॥११॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
एघारौँ अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-१६१+६=१६७



शुरुदेखिको श्लोक सङ्ख्या : १६७



## ॥ अथ द्वादशोऽध्यायः ॥
## (बाह्रौँ अध्याय)
## । अथ गायत्रीजपविधिवर्णनम् ।
## (गायत्री जप गर्ने विधि)

**इति वेदपवित्राण्यभिहितानि, एभ्यः सावित्री विशिष्यते ॥१॥**

वेदका पवित्र मन्त्र बताइ दिइएको छ, यिमध्ये गायत्री मन्त्र श्रेष्ठ हो ।

**नास्त्यघमर्षणात्परमन्तर्जले ॥२॥**

जलभित्र जपिने मन्त्रमा अघमर्षणभन्दा ठूलो अरु मन्त्र छैन ।

**न सावित्र्या समं जप्यं न व्याहृतिसमं हुतम् ॥३॥**

गायत्री समान अर्को कुनै जप छैन । व्याहृति समान कुनै होम छैन ।

**कुशमय्यामासीनः कुशोत्तरीयवान्कुशपवित्रपाणिः प्राङ्मुखः सूर्याभिमुखो वाऽक्षमामुपादाय देवताध्यायी जपं कुर्यात् ॥४॥**

कुशासनमा बसी कुशको जनै काँधमा वस्त्ररुपमा धारण गरी कुशको पवित्र लगाई पवित्र हातवाला भई, पूर्व वा सूर्यतिर फर्की, रुद्राक्ष आदि दानादार माला लिई देवताको ध्यान गर्दै जप गर्नू ।

**सुवर्णमणिमुक्तास्फटिकपद्माक्षरुद्राक्षपुत्रजीवकानामन्यतमेनाऽऽक्दायमालां कुर्यात् ॥५॥**

सुन, मणि, मोती, स्फटिक, पद्माक्ष, रुद्राक्ष वा पुत्रजीवक मध्ये कुनै एक लिई त्यसको माला बनाउनू ।

**कुशग्रन्थिं कृत्वा वामहस्तोपयमैर्वा गणयेत् ॥६॥**

अथवा कुशको डोरीमा गाँठा पारी बायाँ हातमा लिएर गाँठा गन्दै डोरी घुमाउनू ।

**आदौ देवताऋषिच्छन्दः स्मरेत् ॥७॥**

शुरुमा देवता, ऋषि र छन्दलाई सम्झनू ।

**ततः सप्रणवां सव्याहृतिकामादावन्ते च शिरसा गायत्रीमावर्तयेत् ॥८॥**

त्यसपछि प्रणव (ॐ), व्याहृति र शुरु र अन्तमा शिरका साथ गायत्री जप गर्नू ।

**अथास्याः सविता देवता ऋषिर्विश्वामित्रो गायत्री छन्दः ॥९॥**

यी सावित्रीका देवता सविता, ऋषि विश्वामित्र र छन्द गायत्री हो ।

**ॐ कारः प्रणवाख्यः ॥१०॥**

ॐ कारको नाम नै प्रणव हो ।

**ॐ भूः । ॐ भुवः । ॐ स्वः । ॐ महः । ॐ जनः । ॐ तपः । ॐ सत्यमिति व्याहृतयः ॥११॥**

ॐ भूः, ॐ भुवः, ॐ स्वः, ॐ महः, ॐ जनः, ॐ तपः र ॐ सत्यम्-यी व्याहृति हुन् ।

**ओमापो ज्योती रसोऽमृतं ब्रह्म भूर्भुवः स्वरोमिति शिरः ॥१२॥**

'ॐ आपो ज्योती रसोऽमृतं ब्रह्म भूर्वुवः स्वरोम्' यो शिर मन्त्र हो ।

**भवन्ति चात्र श्लोकाः ॥१३॥**

यस सम्बन्धमा श्लोक यस्तो छ- ।

**सव्याहृतिकां सप्रणवां गायत्रीं शिरसा सह ।**
**ये जपन्ति सदा तेषां न भयं विद्यते क्वचित् ॥१४॥**

सधैं व्याहृति, प्रणव र शिरका साथ गायत्री जप गर्नेलाई कुनै डर हुँदैन ।

**शतं जप्त्वा तु सा देवी दिनपापप्रणाशिनी ।**
**सहस्रं जप्त्वा तु तथा पातकेभ्यः समुद्धरेत् ।**
**दशसहस्रं जप्त्वा तु सर्वकल्मषनाशिनी ॥१५॥**

यी देवीले सय पटक जप गरे दिनभर गरेको पाप नष्ट गरिदिन्छिन् । एक हजार पटक जप गरे अरु पापबाट उद्धार गरिदिन्छिन् । दश हजार पटक जप गरे सबै खालका महापाप नष्ट गर्ने हुन्छिन् ।

**सुवर्णस्तेयकृद्विप्रो ब्रह्महा गुरुतल्पगः ।**
**सुरापश्च विशुध्येत लक्षजप्तान्नसंशयः ॥१६॥**

सुन चोर्ने, ब्रह्महत्या गर्ने, गुरुको ओछ्यानमा सुत्ने वा रक्सी पिउने ब्राह्मण पनि यो मन्त्रको एक लाख जप गर्नाले शुद्ध हुन्छ यसमा शङ्का छैन ।

**प्राणयामत्रयं कृत्वा स्नानकाले समाहितः ।**
**अहोरात्रकृतात्पात्तत्क्षणादेव मुच्यते ॥१७॥**

एकाग्र भई नुहाएर त्यसपछि तीन प्राणायाम गर्दा दिन र रातमा गरिएका पापबाट तत्काल मुक्त हुन्छ ।

**सव्याहृतिकाः सप्रणवाः प्राणायामास्तु षोडश ।**
**अपि भ्रूणहनं मासात्पुनन्त्यहरहः कृताः ॥१८॥**

व्याहृति र प्रणवका साथ प्रतिदिन गरिने सोह्र प्राणायामले महिना भरमा भ्रूण हत्यारालाई पनि पवित्र पार्दछ ।

**हुता देवी विशेषेण सर्वकामप्रदायीनी ।**
**सर्वपापक्षयकरी वरदा भक्तवत्सला ॥१९॥**

यदि विशेषरुपले गायत्री देवीले होम गरिए तिनी मनोकांक्षा पूरा गर्ने, सबै पाप नाश गर्ने, वर दिने र भक्तलाई माया गर्ने हुन जान्छिन् ।

**शान्तिकामस्तु जुहुयात्सावित्रीमक्षतैः शुचिः ।**
**हन्तुकामोऽपमृत्युं च घृतेन जुहुयात्तथा ॥२०॥**

शान्ति चाहनेले पवित्रभई अक्षताले तथा मृत्युलाई टाढा भगाउन चाहनेले घिउले सावित्रीलाई आहुती दिनू ।

**श्रीकामस्तु तथा पद्मैर्बिल्वैः काञ्चनकामुकः ।**
**ब्रह्मवर्चसकामस्तु पयसा जुहुयात्तथा ॥२१॥**

श्री चाहनेले कमलले, सुन चाहनेले बेलले तथा ब्रह्मतेज चाहनेले दूधले (गायत्रीलाई) आहुती दिनू ।

**घृतप्लुतैस्तिलैर्वह्निं जुहुयात्सुसमाहितः ।**

**गायत्र्ययुतहोमाच्च सर्वपापैः प्रमुच्यते ॥२२॥**

एकाग्रचित्त भई घिउले भिजेका तिलको होम गर्नू । यसरी दश हजार गायत्रीका साथ होम गर्नाले सबै पापबाट मुक्त हुन्छ ।

**पापात्मा लक्षहोमेन पातकेभ्यः प्रमुच्यते ।**
**अभीष्टं लोकमाप्नोति प्राप्नुयात्काममीप्सितम् ॥२३॥**

पापी पनि एक लाख होम गर्नाले पापबाट मुक्त हुन्छ, उत्तम लोक प्राप्त गर्दछ तथा मनले सोचेको इच्छा पूरा गर्दछ ।

**गायत्री वेदजननी गायत्री पापनाशिनी ।**
**गायत्र्या परमं नास्ति दिवि चेह च पावनम् ॥२४॥**

गायत्री वेदकी आमा हुन् । गायत्री पापनाशिनी हुन् । स्वर्ग र यो लोकमा गायत्री भन्दा ठूलो केही पनि पवित्र गर्ने कुरा छैन ।

**हस्तत्राणप्रदा देवी पततां नरकार्णवे ।**
**तस्मात्तामभ्यसेन्नित्यं ब्राह्मणो नियतः शुचिः ॥२५॥**

नरककुण्डमा परेकाहरुका लागि गायत्री हात समाएर रक्षा गर्ने हुन्छिन् । यसैले ब्राह्मण संयमी र पवित्र भई सधैं यसको अभ्यास गरुन् ।

**गायत्रीजाप्यनिरतं हव्यकव्येषु भोजयेत् ।**
**तस्मिन्न तिष्ठते पापमबबिन्दुरिव पुष्करे ॥२६॥**

गायत्रीको जपमा लागेको मानिसलाई हव्य र कव्य खुवाउनू । त्यस्ताको भित्रको पाप कमलको पातमा पानी टिक्न नसके जस्तै टिक्दैन ।

**जपेनैव तु संसिध्येद् ब्राह्मणो नात्र संशयः ।**
**कुर्यादन्यन्न वा कुर्यान्मैत्रो ब्राह्मण उच्यते ॥२७॥**

अरु केही गरोस् या नगरोस् जपका कारण नै ब्राह्मण सिद्धि प्राप्त गर्दछ यसमा शङ्का छैन । यस्तो ब्राह्मण मैत्र (पुरुष पूर्णताको उच्चतम स्थितिमा पुगेको ब्राह्मण) भनी चिनिन्छ ।

**उपांशु स्याच्छतगुणः साहस्रो मानसः स्मृतः ।**
**नोच्चैर्जपं बुधः कुर्यात्सावित्र्यास्तु विशेषतः ॥२८॥**

मुखभित्र मन्दस्वरमा जपेको जप सय गुणा फल दिने हुन्छ । मनमनै गरिने जप हजार गुणा फल दिने हुन्छ । ज्ञानीले कहिल्यै पनि ठूलो स्वरले मन्त्र जप गर्नु हुँदैन विशेषतः गायत्रीको त झन हुँदैन ।

**सावित्रीजाप्यनिरतः स्वर्गमाप्नोति मानवः ।**
**गायत्रीजप्यनिरतो मोक्षोपायं च विन्दति ॥२९॥**

सावित्री जपमा लागिरहने मानिसले स्वर्ग पाउँदछ । गायत्रीको जपमा लागेको मानिसले मोक्षको उपाय पाउँदछ ।

**तस्मात्सर्वप्रयत्नेन स्नातः प्रयतमानसः ।**
**गायत्रीं तु जपेद्भक्त्या सर्वपापप्रणाशिनीम् ॥३०॥**

यसैले नुहाएर मनलाई संयमित पारी सबै प्रकारका प्रयत्नले भक्तिपूर्वक सर्वपाप नाशिनी गायत्रीको जप गर्नू ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे द्वादशोऽध्यायः ॥१२॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
बाह्रौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-१६७+३०=१९७



शुरुदेखिको श्लोक सङ्ख्या : १९७



## ॥ अथ त्रयोदशोऽध्यायः ॥
## (तेह्रौं अध्याय)
## । अथ तर्पणविधिवर्णनम् ।
## (तर्पण विधि)

**स्नातः कृतजप्यस्तदनु प्राङ्मुखो दिव्येन तीर्थेन देवानुदकेन तर्पयेत् ॥१॥**

नुहाएर जप गरिसकेपछि पूर्वतिर फर्की दैव तीर्थले जल दिएर देवतालाई तृप्त गर्नू ।

## अथ तर्पणविधिः ॥२॥

अब तर्पणको विधि बताइन्छ ।

**ॐ भगवन्तं शेषं तर्पयामि ॥३॥**

भगवान् शेषलाई तर्पण गर्दछु ।

**कालाग्निरुद्रं तु ततो रुक्मभौमं तथैव च ।
श्वेतभौमं ततः प्रोक्तं पातालानां च सप्तकम् ॥४॥**

त्यस पछि काल, अग्नि र रुद्रलाई त्यसपछि रुक्मभौमलाई त्यसपछि श्वेतभौमलाई
अनि सात पाताललाई तर्पण गर्ने बताइएको छ ।

**जम्बुद्वीपं ततः प्रोक्तं शाकद्वीपं ततः परम् ।
गोमेदपुष्करे तद्वच्छाकाख्यं च ततः परम् ॥५॥**

त्यसपछि जम्बुद्वीप, त्यसपछि शाकद्वीप अनि गोमेद र पुष्कर
तथा शाकद्वीपलाई तर्पण गर्ने बताइएको छ ।

**शार्वरं ततः स्वधामानां ततो हिरण्यरोमाणं ततः कल्पस्थायीनो लोकांस्तर्पयेत् ॥६॥**

त्यसपछि शार्वर, फेरि स्वधामान, फेरि हिरण्यरोमा र त्यसपछि
कल्पसम्म ननासिने भएका लोकलाई तृप्त गर्नू ।

**लवणोदकं ततः क्षीरोदं ततो घृतोदं तत इक्षूदं ततः स्वादूदं तत इति सप्तसमुद्रकं
प्रत्यृचं पुरुषसूक्तेनोदकाञ्जलीन्दद्यात्, पुष्पाणि च तथा भक्त्या ॥७॥**

त्यसपछि लवण सागर, त्यसपछि क्षीर सागर, त्यसपछि घृतसागर, त्यसपछि इक्षु सागर,
त्यसपछि स्वादु सागर आदि सात समुद्रलाई पुरुषसूक्तद्वारा प्रत्येक ऋचाका साथ जलाञ्जलि
दिनू र भक्तिपूर्वक फूल चढाउनू ।

**अथ कृतापसव्यो दक्षिणामुखोक्न्तर्जानुः
पित्र्येण पितृणां यथाश्राद्धं प्रकाममुदकं दद्यात् ॥८॥**

त्यसपछि अपसव्य भएर दक्षिणतिर फर्की दुवै हातलाई घुँडाभित्र पारी पितृतीर्थले पितृहरुलाई पितृश्राद्धकै अनुसार पर्याप्त जल प्रदान गर्नू ।

**सौवर्णेन पात्रेण राजतेनौदुम्बरेण खङ्गपात्रेणान्यपात्रेण वोदकं पितृतीर्थं
स्पृशन्दद्यात् ॥९॥**

सुनको भाँडाले, चाँदी वा डुम्रीको काठले बनेको भाँडाले, गैंडाको छालाले बनेको भाँडाले वा अन्य भाँडाले पितृतीर्थलाई छुवाउँदै जल (उल्लेखित पितृलाई) दिनू ।

**पित्रे पितामहाय प्रपितामहाय मात्रे पितामह्यै प्रपितामह्यै मातामहाय प्रमातामहाय मातामह्यै प्रमातामह्यै सप्तमात्पुरुषात्पितृपक्षे यावतां नाम जानीयात्पितृपक्षाणां तर्पणं कृत्वा गुरूणां मातृपक्षाणां तर्पणं कुर्यात् ॥१०॥**

बाबु, बाजे, बराजु, आमा, हजुरआमा, जिजुबज्यै, आमाका बाबु, आमाका बाजे, आमाकी आमा, आमाकी हजूरआमा लगायतका पितृपक्षका सातपुस्तासम्म जसको नाम थाहा छ तिनलाई जल दिनू । पितृपक्षलाई तर्पण गरेपछि गुरुजन र मातृपक्षकालाई पनि तर्पण गर्नू ।

**मातृपक्षाणां तर्पणं कृत्वा संबन्धिबान्धवानां कुर्यात्,
तेषां कृत्वा सुहृदां कुर्यात् ॥११॥**

मातृपक्षकालाई तर्पण गरेपछि सम्बन्धि र बन्धुबान्धवलाई तर्पण गर्नू । त्यसपछि मित्रजनलाई तर्पण गर्नू ।

**भवन्ति चात्र श्लोकाः ॥१२॥**

यस सम्बन्धमा केही यस्ता श्लोक छन्- ।

**विना रौप्यसुवर्णेन विना ताम्रतिलेन च ।
विना दर्भैश्च मन्त्रैश्च पितृणां नोपतिष्ठते ॥१३॥**

सुन, चाँदी वा तामाको भाँडो बिना, तिल बिना, कुश बिना र

मन्त्र बिनाको जल पितृलाई प्राप्त हुँदैन ।

**सौवर्णराजताभ्यां च खड्गेनौदुम्बरेण च ।**
**दत्तमक्षय्यतां याति पितृणां तु तिलोदकम् ॥१४॥**

सुन वा चाँदी अथवा गैंडाको शरीरले बनेको वा डुम्रीको काठले बनेको भाँडोले पितृलाई दिइएको तिल मिसिएको जल कहिल्यै नासिंदैन ।

**हेम्ना तु सह यद्दत्तं क्षीरेण मधुना सह ।**
**तदप्यक्षय्यतां याति पितृणां तु तिलोदकम् ॥१५॥**

सुनका साथ तथा दूध र महका साथ पितृलाई दिइएको तिल मिसिएको जल पनि कहिल्यै नासिंदैन ।

**कुर्यादहरहः श्राद्धमन्नाद्येनोदकेन वा ।**
**पयोमूलफलैर्वाऽपि पितृणां प्रीतिमावहन् ॥१६॥**

अन्नले वा जलले अथवा दूध, कन्दमूल र फलफूलले पितृलाई प्रसन्न पार्दै दिनहुँ श्राद्ध गर्नू ।

**स्नातः संतर्पणं कृत्वा पितृणां तु तिलाम्भसा ।**
**पितृयज्ञमवाप्नोति प्रीणाति च पितृंस्तथा ॥१७॥**

नुहाएर तिल र जलले पितृलाई तर्पण गर्नेले पितृयज्ञको फल प्राप्ति गर्दछ एवं पितृलाई प्रसन्न पार्दछ ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे त्रयोदशोऽध्यायः ॥१३॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
तेह्रौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-१९७+१७=२१४



शुरुदेखिको श्लोक सङ्ख्या : २१४



## ॥ अथ चतुर्दशोऽध्यायः ॥
## (चौधौं अध्याय)
## । अथ श्राद्धे ब्राह्मणपरीक्षावर्णनम् ।
## (श्राद्धमा ब्राह्मण परीक्षा)

**ब्राह्मणान्न परीक्षेत दैवे कर्मणि धर्मवित् ।**
**पित्र्ये कर्मणि संप्राप्ते युक्तमाहुः परीक्षणम् ॥१॥**

धर्मज्ञहरुले देवकर्ममा ब्राह्मण जाँच नगर्नू, पितृकर्म आउँदा
जाँच गर्नू उचित छ भनी बताइएका छन् ।

**ब्राह्मणा ये विकर्मस्था वैडालव्रतिकास्तथा ।**
**ऊनाङ्गा अतिरिक्ताङ्गा ब्राह्मणाः पङ्क्तिदूषकाः ॥२॥**

जो ब्राह्मण, गर्न निषेध गरिएका कर्म गर्ने गर्दछ, विडाल व्रती छ, कम वा धेरै अङ्ग
भएको छ त्यो ब्राह्मण-पङ्क्ति दूषित गर्ने हुन्छ ।

**गुरूणां प्रतिकूलाश्च वेदाग्न्युत्सादिनश्च ये ।**
**गुरूणां त्यागिनश्चैव ब्राह्मणाः पङ्क्तिदूषकाः ॥३॥**

जो ब्राह्मण, गुरुका विरुद्ध जान्छ, वेद र अग्निको नाश गर्दछ तथा गुरुको त्याग गर्दछ
त्यो ब्राह्मण-पङ्क्ति दूषित गर्ने हुन्छ ।

**अनध्यायेष्वधइीनाः शौचाचारविवर्जिताः ।**
**शूद्रान्नरससंपुष्टा ब्राह्मण पङ्क्तिदूषकाः ॥४॥**

पढ्न नहुने बेलामा वेदादि पढ्ने, पवित्रता तथा आचारहीन, शूद्रको अन्नको रसले
पुष्ट छ त्यो ब्राह्मण-पङ्क्ति दूषित गर्ने हुन्छ ।

**षडङ्गवित्तिसुपर्णो बह्वृचो ज्येष्ठसामगः ।**
**त्रिणाचिकेतः पञ्चाग्निब्राह्मणः पङ्क्तिपावनः ॥५॥**

जो ब्राह्मण वेदका पाँचै अङ्ग जान्दछ, ऋग्वेदको दशम मण्डलको ११४ औं सूक्तको ३-५ को
उच्चारण गर्न जान्दछ, धेरै ऋचाहरु जान्दछ, ज्येष्ठ साम (ताण्ड्य ब्रा.२१.२.३.) मन्त्र गान

गर्दछ, नाचिकेत अग्निमा तीन पटक होम गर्दछ वा पाँच पवित्र अग्निमा (दक्षिण, गार्हपत्य, आवहनई, सभ्य र आवसध्य) होम गर्दछ त्यो ब्राह्मण पङ्क्ति-पावन हुन्छ ।

**ब्रह्मदेयानुसंतानो ब्रह्मदेयाप्रदायकः ।**
**ब्रह्मदेयापतिर्यश्च ब्राह्मणः पङ्क्तिपावनः ॥६॥**

जो ब्राह्म विवाहको विधिले विवाहिताको सन्तान हो, जसले आफ्नी (छोरा)छोरीको विवाह पनि ब्राह्म विवाहको विधिले गर्ने गरेको छ तथा जो ब्राह्म विवाहको विधिले विवाहिता स्त्रीको पति हो त्यो ब्राह्मण पङ्क्ति-पावन हुन्छ ।

**ऋग्यजुःपारगो यश्च साम्नां यश्चापि पारगः ।**
**अथर्वाङ्गिरसोऽध्येता ब्राह्मणः पङ्क्तिपावनः ॥७॥**

जो ऋग्वेद र यजुर्वेदमा पारङ्गत छ, साम मन्त्रको पारङ्गत छ तथा अथर्ववेदको अध्ययन गर्ने गर्दछ त्यो ब्राह्मण पङ्क्ति-पावन हुन्छ ।

**नित्यं योगरतो विद्वान्समलोष्टाश्मकाञ्चनः ।**
**ध्यानशीलो यतिर्विद्वान्ब्राह्मणः पङ्क्तिपावनः ॥८॥**

जो सधैं योगमा लागिरहन्छ, विद्वान छ, माटोको थुप्रो र सुनमा समान दृष्टि राख्छ, ध्यानशील छ, संयमी छ तथा ज्ञानी छ त्यो ब्राह्मण पङ्क्ति-पावन हुन्छ ।

**द्वौ दैवे प्राङ्मुखौ त्रीन्वा पित्र्ये चोदङ्मुखांस्तथा ।**
**भोजयेद्विविधान्विप्रानेकैमुभयत्र वा ॥९॥**

देवकार्यमा पूर्वतिर फर्काएर दुई तथा पितृश्राद्धमा उत्तरतिर फर्काएर तीन ब्राह्मणलाई अथवा दुवै कार्यमा अनेक वा एक ब्राह्मणलाई भोजन गराउनू ।

**भोजयेदथवाऽप्येकं ब्राह्मणं पङ्क्तिपावनम् ।**
**दैवे कृत्वा तु नैवेद्यं पश्चाद्वह्नौ तु तत्क्षिपेत् ॥१०॥**

अथवा एउटै पङ्क्ति-पावन ब्राह्मणलाई भोजन खुवाउनू । देवकर्ममा नैवेद्य तयारपारी त्यसपछि अग्निलाई चढाउनू ।

**उच्छिष्टसंनिधौ कार्यं पिण्डनिवर्पणं बुधैः ।**
**अभावे च तथा कार्यमग्निकार्यं यथाविधि ॥११॥**

बुद्धिमानले पिण्ड दिने कार्य बाँकी रहेको भोजनको नजिक गर्नू । (पिण्डदान) नगर्दा विधि अनुसार अग्निकार्य गर्नू (अर्थात त्यो भोजनलाई आगोमा होम गर्नू पर्दछ) ।

**श्राद्धं कृत्वा प्रयत्नेन त्वराक्रोधविवर्जितः ।**
**उष्णमन्नं द्विजातिभ्यः श्रद्धया विनिवेदयेत् ॥१२॥**

उत्ताउलो नभई क्रोध त्यागेर प्रयत्नपूर्वक श्राद्ध गरी ब्राह्मणलाई श्रद्धाले तातो भोजन गराउनू ।

**अन्यत्र पुष्पमूलेभ्यः पीठकेभ्यश्च पण्डितः ।**
**भोजयेद्विविधान्विप्रान् गन्धमाल्यसमुज्ज्वलान् ॥१३॥**

फूल, मूल र चौकीलाई छोडी अन्यत्र आसनमा बसाएर विद्वान द्विजले चन्दन र मालाले शोभायमान ब्राह्मणलाई अनेक प्रकारले भोजन गराऊन् ।

**यत्किंचित्पच्यते गेहे भक्ष्यं वा भोज्यमेव वा ।**
**अनिवेद्य न भोक्तव्यं पिण्डमूले कदाचन ॥१४॥**

घरमा जेजति भोज्य वा भक्ष्य पकाइएको हो त्यसलाई पिण्डस्थानमा समर्पित नगरी कहिल्यै नखानू ।

**उग्रगन्धान्यगन्धानि चैत्यवृक्षभवानि च ।**
**पुष्पाणि वर्जनीयानि रक्तवर्णानि यानि च ॥१५॥**

तीखो गन्ध आउने, गन्ध नआउने, मसानका रुखमा फूल्ने र रातो रङ्गका फूल पनि यो कार्यमा वर्जित हुन्छ ।

**तोयोद्भवानि देयानि रक्तान्यपि विशेषतः ।**
**ऊर्णासूत्रं प्रदातव्यं कार्पासमथवा नवम् ॥१६॥**

जलोत्पन्न फूल रातो पनि विशेषरुपले दिन योग्य हुन्छ । जलोत्पन्न रातो फूलले वा कपासले बुनेको नयाँ धागो दिन योग्य हुन्छ ।

**दशां विवर्जयेत्प्राज्ञो यद्यप्यहतवस्त्रजाम् ।**
**घृतेन दीपो दातव्यस्तिलतैलेन वा पुनः ॥१७॥**

बुनेका कपडाको फेर चाहे त्यो धोइएको किन नहोस् त्यसलाई
छोड्नू (त्यसले बत्ती नबनाउनु) । घिउ वा तिलको तेलले दीप दिनू ।

**धूपार्थं गुग्गुलं दद्याद् घृतयुक्तं मधूत्कटम् ।**
**चन्दनं च तथा दद्यात्पिष्टं च कुङ्कुमं शुभम् ॥१८॥**

धूपका लागि घिउ वा मह मिसिएको गोकुलधूप दिनू तथा
चन्दन वा पिसिएको पवित्र कुङ्कुम दिनू ।

**भूतृणं सुरसं शिग्रुं पालकं सिन्धुकं तथा ।**
**कूष्माण्डालाबुवार्ताककोविदारांश्च वर्जयेत् ॥१९॥**

एकथरी सुगन्धित घाँस, सुरस (सिनकाउली, सिमलको खोटो, पहैँलो धूपी (?), शिग्रु (पहैँलो सैजन), पालुङ्गो, सिँवाली, कुभिण्डो, लौका, भ्यान्टा र कोइरालो श्राद्धमा छाड्नू ।

**पिप्पलीं मरिचं चैव तथा वै पिण्डमूलकम् ।**
**कृतं च लवणं सर्वं वंशाग्रं तु विवर्जयेत् ॥२०॥**

पिप्ला, मरिच, सलगम, सबै प्रकारका बनाइएका नुन र बाँसको
टुप्पो (तामा) श्राद्धमा परित्याग गर्नू ।

**राजमाषान्मसूरांश्च कोद्रवान्कोरदूषकान् ।**
**लोहितान्वृक्षनिर्यासान् श्राद्धकर्मणि वर्जयेत् ॥२१॥**

मास, मुसुरो, कोदो, एकथरी कोदो र वृक्षको रातो चोप श्राद्धकर्ममा त्याग गर्नू ।

**आम्रमामलकीमिक्षुं मृद्वीकादधिदाडिमान् ।**
**विदार्यश्चैव रम्भाद्या दद्याच्छ्राद्धे प्रयत्नतः ॥२२॥**

आँप, अमला, ऊखु, अङ्गुर, दही, अनार, विदारी कन्द (भुईं कुभिण्डो?),

केरा आदि श्राद्धमा प्रयत्नपूर्वक दिनू ।

**धानालाजे मधुयुते सक्तूञ्शर्करया सह ।**
**दद्याच्छ्राद्धे प्रयत्नेन श्रृङ्गाटकविसेतकान् ॥२३॥**

मह मिसिएको लाजा, सखर मिसाइएको सातु, सिंगडा (समसा) र विसेतक (भीसों?) लाई श्राद्धमा प्रयत्नपूर्वक दिनू ।

**भोजयीत्वा द्विजान्भक्त्या स्वाचान्तान्दत्तदक्षिणान् ।**
**अभिवाद्य पुनर्विप्रान्नुव्रज्य विसर्जयेत् ॥२४॥**

ब्राह्मणहरुलाई श्रद्धाले भोजन गराई, आचमन आदि गराएर दक्षिणा दिई, अभिवादन गरी पछिपछि परसम्म गई बिदा गर्नू ।

**निमन्त्रितस्तु यः श्राद्धे मैथुनं सेवते द्विजः ।**
**श्राद्धं दत्त्वा च भुक्त्वा च युक्तः स्यान्महतैनसा ॥२५॥**

श्राद्धमा निमन्त्रित ब्राह्मण स्त्री-भोग गर्दछ भने त श्राद्धमा खुवाउने र खाने दुवै जना भारी पापले युक्त हुन्छन् ।

**कालशाकं सशल्कांश्च मांसं वाध्रीणसस्य च ।**
**खड्गमांसं तथाऽनन्तं यमः प्रोवाच धर्मवित् ॥२६॥**

कालशाक (माछा वा समय अनुसारको साग), सशल्क (माछा), गैंडाको मासु वा भैंसीको मासु (श्राद्धमा) दिएर अनन्त पुण्य कमाउँदछ । यो कुरा धर्म जानेका यमले बताएका छन् ।

**यद्ददाति गयाक्षेत्रे प्रभासे पुष्करे तथा ।**
**प्रयागे नैमिषारण्ये सर्वमानन्त्यमश्नुते ॥२७॥**

जसले गयामा, प्रवासमा, पुष्करमा, प्रयागमा वा नैमिषारण्यमा श्राद्ध गर्दछ उसले सबै खालका अनन्तता पाउँदछ ।

**गङ्गायमुनयोस्तीरे पयोष्ण्याममरकण्टके ।**
**नर्मदायां गयातीरे सर्वमानन्त्यमुच्यते ॥२८॥**

गङ्गा र यमुनाको तीरमा, विन्ध्यको पूर्णा नामको नदीमा, अमरकण्टकमा, नर्मदामा वा गयाको तीरमा श्राद्ध गर्नेले पनि सबै खाले अनन्तता पाउँदछ ।

**वाराणस्यां कुरुक्षेत्रे भृगुतुङ्गे महालये ।**
**सप्तवेण्यृषिकूपे च तदप्यक्षय्यमुच्यते ॥२९॥**

वाराणसी, कुरुक्षेत्र, भृगुतुङ्ग, महालय कालमा, सप्तवेणी र ऋषिकूपमा दिइएको श्राद्ध पनि ननासिने हुन्छ ।

**म्लेच्छदेशे तथा रात्रौ संध्यायां च विशेषतः ।**
**न श्राद्धमाचरेत्प्राज्ञो म्लेच्छदेशे न च व्रजेत् ॥३०॥**

म्लेच्छको देशमा, रातमा तथा विशेष गरी साँझमा बुद्धिमानले श्राद्ध नगर्नू एवं म्लेच्छका देशमा नजानू ।

**हस्तिच्छायासु यद्दत्तं यद्दत्तं राहुदर्शने ।**
**विषुवत्ययने चैव सर्वमानन्त्यमुच्यते ॥३१॥**

गजच्छायाँको योगमा, ग्रहणमा, वैशाख मसान्त र श्रावण मसान्तमा तथा मकर र कर्कट संक्रान्तिमा दिइएको श्राद्ध अनन्त फलका लागि बताइएको छ ।

**प्रोष्ठपद्यामतीतायां मघायुक्तां त्रयोदशीम् ।**
**प्राप्य श्राद्धं तु कर्तव्यं मधुना पायसेन वा ॥३२॥**

भाद्रको पूर्णिमा बितेपछि मघायुक्त त्रयोदशीमा मह वा खीरले श्राद्ध गर्नू ।

**प्रजां पुष्टिं यशः स्वर्गमारोग्यं च धनं तथा ।**
**नृणां श्राद्धैः सदा प्रीताः प्रयच्छति पितामहाः ॥३३॥**

पितृगण मानिसले दिएको श्राद्धले प्रसन्न भई तिनलाई सदा सन्तान, पौष्टिकता, कीर्ति, स्वर्ग, निरोगिता र धन प्रदान गर्दछन् ।

॥ इति श्री शाङ्खी धर्मशास्त्रे चतुर्दशोऽध्यायः ॥१४॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,

चौधौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-२१४+३३=२४७



शुरुदेखिको श्लोक सङ्ख्या : २४७



## ॥ अथ पञ्चदशोऽध्यायः ॥
## (पन्ध्रौं अध्याय)
## । अथ जननमरणाशौचवर्णनम् ।
## (जुठो र सूतक)

**जनने मरणे चैव सपिण्डानां द्विजोत्तमः ।**
**त्र्यहाच्छुद्धिमवाप्नोति योग्निवेदसमन्वितः ॥१॥**

जो ब्राह्मण अग्निहोत्री र वेदपाठी छ, उसले सपिण्डीको
जन्ममरणमा तीन दिनमा शुद्धता प्राप्त गर्दछ ।

**सपिण्डता तु पुरुषे सप्तमे विनिवर्तते ।**
**नामधारकविप्रस्तु दशाहेन विशुध्यति ॥२॥**

सपिण्डता सात पुस्तामा पुगेर समाप्त हुन्छ । नाममात्रको ब्राह्मण दश दिनमा शुद्ध हुन्छ ।

**क्षत्रियो द्वादशाहेन वैश्यः पक्षेण शुध्यति ।**
**मासेन तु तथा शूद्रः शुद्धिमाप्नोति नान्तरा ॥३॥**

क्षत्रिय बाह्र दिनमा, वैश्य पन्ध्र दिनमा शुद्ध हुन्छ । शूद्र एक महिनामा
शुद्ध हुन्छ । यसभन्दा कममा शुद्ध हुँदैन ।

**रात्रिभिर्मासतुल्याभिर्गर्भस्रावे विशुध्यति ।**
**अजातदन्तबाले तु सद्यः शौचं विधीयते ॥४॥**

गर्भस्रावमा (पिताका सपिण्डी) गर्भमहिना समान रातमा शुद्ध हुन्छन् । दाँत
नउम्रेको वालकको मृत्युमा नुहाउनाले शुद्धि हुन्छ ।

**अहोरात्रात्तथा शुद्धिर्बाले त्वकृतचूडके ।**
**तथैवानुपनीते तु त्र्यहाच्छुध्यन्ति बान्धवाः ॥५॥**

बान्धवजन चूडाकर्म नगरेको वालकको मृत्युमा एक दिनरातमा तथा उपनयन नगरेको वालकको मृत्युमा तीन दिनमा शुद्ध हुन्छन् ।

**अनूढानां तु कन्यानां तथैव शूद्रजन्मनाम् ।**
**अनूढभार्यः शुद्रस्तु षोडशाद्वत्सरात्परम् ।६।**
**मृत्युं समधिगच्छेच्चेन्मासात्तस्यापि बान्धवाः ।**
**शुद्धिं समभिगेच्छेयुर्नात्र कार्या विचारणा ॥७॥**

अविवाहिता कन्या तथा अविवाहित शूद्रको मृत्युमा पनि तीन दिनमा शुद्धि हुन्छ । तर, शूद्र अविवाहित छ र सोह्र वर्ष नाघि सकेको छ भने त्यो अवस्थामा उसको मृत्यु हुँदा उसका बान्धव पनि एक महिनामा नै शुद्ध हुन्छन् । यसमा विचार गर्नूपर्ने आवश्यकता छैन ।

**पितृवेश्मनि या कन्या रजः पश्यत्यसंस्कृता ।**
**तस्यां मृतायां नाशौचं कदाचिदपि शाम्यति ॥८॥**

अविवाहिता कन्या बाबुको घरमा रजस्वला भई र उनको मृत्यु बाबुकै घरमा भयो भने त आशौच कहिल्यै समाप्त हुँदैन ।

**हीनवर्णास्तु या नारी प्रमादात्प्रसवं व्रजेत् ।**
**प्रसवे मरणे तज्जमशौचं नोपशाम्यति ॥९॥**

प्रमादले गर्दा जुन नारी हीनवर्णका पुरुषबाट (विवाह अघि) बच्चा जन्माउँदछे, त्यस्तो बच्चाको जन्ममरणका कारण हुने आशौच कहिल्यै सर्किंदैन ।

**समानं खल्वशौचं तु प्रथमेन समापयेत् ।**
**असमानं द्वितईीन धर्मराजवचो यथा ॥१०॥**

दोश्रो समान आशौच पहिलो सँगै र पहिलो असमान आशौच दोश्रो असमान आशौचका साथ समाप्त हुन्छ भन्ने धर्मराजको वचन छ ।

**देशान्तरगतः श्रुत्वा कुल्यानां मरणोद्भवौ ।**

**गच्छेषं दशरात्रस्य तावदेवाशुचिर्भवेत् ॥११॥**

विदेश गएको मानिसले आफ्नो कुलका कसैको जन्म-मरणका विषयमा सुने, सुनेको दिनदेखि दश दिन पुग्न बाँकी दिनकै आशौच हुन्छ ।

**अतीते दशरात्रे तु त्रिरात्रमशुचिर्भवेत् ।**
**तथा संवत्सरेऽतीते स्नान एव विशुध्यति ॥१२॥**

सुन्दा दश रातको आशौच कटि सकेको भए उसलाई तीन दिनको आशौच हुन्छ । सुन्दा एक वर्ष कटि सकेको भए नुहाउनाले नै शुद्ध हुन्छ ।

**अनौरसेषु पुत्रेषु भार्यास्वन्यगतासु च ।**
**परपूर्वासु च स्त्रीषु त्र्यहाच्छुद्धिरिहेष्यते ॥१३॥**

दत्तक आदि पुत्र, पोइल गएकी पत्नी र पोइल आएकी पत्नीको तीन दिनमा शुद्धि हुन्छ-यस्तो भनिन्छ ।

**मातामहे व्यतीते तु आचार्ये च तथा मृते ।**
**गृहे दत्तासु कन्यासु मृतासु च त्र्यहस्तथा ॥१४॥**

मावली हजुरबूबाको मरणमा, आचार्यको मरणमा र विवाह भई माइतै बसिरहेकी कन्याको मरणमा तीन दिनमा शुद्धि हुन्छ ।

**निवासराजनि प्रेते जाते दौहित्रके गृहे ।**
**आचार्यपत्नीपुत्रेषु प्रेतेषु दिवसेन च ॥१५॥**

आफू रहेको देशका राजाको मृत्युमा, आफ्नो घरमा छोरीको छोरो जन्मदा र आचार्यकी पत्नी वा पुत्र मरेमा एक दिनमा शुद्ध हुन्छ ।

**मातुले पक्षिणीं रात्रिं शिष्यर्त्विग्बान्धवेषु च ।**
**स ब्रह्मचारिण्येकाहमनूचाने तथा मृते ॥१६॥**

मामा, शिष्य र ऋत्विग्को मृत्युमा अघिपछिका दुई दिन सहित एक रात एवं ब्रह्मचारी र साङ्गोपाङ्ग वेदज्ञको मृत्युमा एक दिन आशौच रहन्छ ।

**एकरात्रं त्रिरात्रं च षड्रात्रं मासमेव च ।**
**शूद्रे सपिण्डे वर्णानामशौचं क्रमशः स्मृतम् ॥१७॥**

ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रलाई तिनका शूद्र सपिण्डीको मृत्युमा क्रमशः एक, तीन, छ दिन र एक महिनासम्म आशौच मानिएको छ ।

**त्रिरात्रमथ षड्रात्रं पक्षं मासं तथैव च ।**
**वैश्ये सपिण्डे वर्णानामशौचं क्रमशः स्मृतम् ॥१८॥**

ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रलाई तिनका वैश्य सपिण्डीको मृत्युमा क्रमशः तीन दिन, छ रात, एक पक्ष र एक महिनासम्म आशौच मानिएको छ ।

**सपिण्डे क्षत्त्रिये शुद्धिः षड्रात्रं ब्राह्मणस्य तु ।**
**वर्णानां परिशिष्टानां द्वादशाहं विनिर्दिशेत् ॥१९॥**

क्षत्रिय सपिण्डीको मृत्युमा ब्राह्मण छ दिनमा र बाँकी वर्ण बाह्र दिनमा शुद्ध हुने बताइएको छ ।

**सपिण्डे ब्राह्मणे वर्णाः सर्व एवाविशेषतः ।**
**दशरात्रेण शुध्येयुरित्याह भगवान्यमः ॥२०॥**

ब्राह्मण सपिण्डीको मृत्युमा सबै वर्ण विशेषतः दश दिनमा शुद्ध हुने छन् भनी भगवान् यमद्वारा बताइएको छ ।

**भृग्वग्न्यनशनाम्भोभिर्मृतानामात्मघातिनाम् ।**
**पतितानां च नाशौचं शस्त्रविद्युद्धताश्च ये ॥२१॥**

पर्वतबाट खसेर, अग्नि, अनशन र जलले मर्ने, आत्महत्या गर्ने, पतित तथा शस्त्र वा विद्युतले मारिनेको आशौच हुँदैन ।

**यतिव्रतिब्रह्मचारिनृपकारुकदीक्षिताः ।**
**नाशौचभाजः कथिता राजाज्ञाकारिणश्च ये ॥२२॥**

सन्यासी, व्रतालु, ब्रह्मचारी, राजा, शिल्पकार, दीक्षा ग्रहण गर्ने र

राजाज्ञामा बसेकाले आशौच बार्नु पर्दैन ।

**यस्तु भुङ्क्ते पराशौचे वर्णी सोऽप्यशुचिर्भवेत् ।**
**अशौचशुद्धौ शुद्धिश्च तस्याप्युक्ता मनीषिभिः ॥२३॥**

जो सन्यासी अरुको आशौचमा भोजन गर्दछ ऊ पनि आशौची हुन्छ । विद्वानले आशौच चोखिए पछि उसको शुद्धि हुने बताएका छन् ।

**पराशौचे नरो भुक्त्वा कृमियोनौ प्रजायत ।**
**भुक्त्वाऽन्नं म्रियते यस्य तस्य योनौ प्रजायते ॥२४॥**

मानिस पराया आशौचमा भोजन खाई कीराको योनिमा जन्मन्छ ।
जसको अन्न खाएर ऊ मर्दछ त्यसैको योनिमा जन्मन्छ ।

**दानं प्रतिग्रहो होमः स्वाध्यायः पितृकर्म च ।**
**प्रेतपिण्डक्रियावर्जमशौचे विनिवर्तयेत् ॥२५॥**

आशौचमा प्रेतलाई पिण्ड दिने कार्य बाहेक दान दिन, दान लिन, होम गर्न, वेद आदि पढ्न र पितृकर्म गर्न हुँदैन ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे पञ्चदशोऽध्यायः ॥१५॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
पन्ध्रौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-२४७+२५=२७२



शुरुदेखिको श्लोक सङ्ख्या : २७२



## ॥ अथ षोडशोऽध्यायः ॥
## (सोह्रौं अध्याय)
## । अथ द्रव्यशुद्धि मृण्मयादिपात्रशुद्धिवर्णनम् ।
## (द्रव्य भाँडा आदिको शुद्धि)

मृण्मयं भाजनं सर्वं पुन पाकेन शुध्यति ।
मद्यैर्मूत्रैः पुरीषैश्च ष्ठीवनैः पूयशोणितैः ॥१॥
संस्पृष्टं नैव शुध्येत पुनः पाकेन मृण्मयम् ।
एतैरेव तथा स्पृष्टं ताम्रसौवर्णराजतम् ॥२॥
शुध्यत्यावर्तितं पश्चादन्यथा केवलाम्भसा ।
आम्लोदकेन ताम्रस्य सीसस्य त्रपुणस्तथा ॥
क्षारेण शुद्धिः कांसस्य लोहस्य च विनिर्दिशेत् ॥३॥

माटाले बनेका सबै भाँडा आगोमा पकाउनाले शुद्ध हुन्छन् । मदिरा, मुत, दिसा, थुक र रगत परेका माटाका भाँडा आगोमा फेरी पकाएर पनि शुद्ध हुँदैन । मदिरा, मुत, दिसा, थुक र रगतले दूषित तामा, सुन र चाँदीका सामान फेरी गालेर बनाउनू । अरु कुराले दूषित भए पानीले नै शुद्ध हुन्छ । तामा, सिसा र जस्ताका भाँडाको शुद्धि तेजाब पानीले एवं काँस र फलामका भाँडाको शुद्धि क्षारले हुने बताइएको छ ।

मुक्तामणिप्रवालानां शुद्धिः प्रक्षालनेन तु ।
अब्जानां चैव भाण्डानां सर्वस्याश्ममयस्य च ॥
शाकमूलफलानां च विदलानां तथैव च ॥४॥

जलमा उत्पन्न हुने मोती, मणि र मुँगाले बनेका तथा सबै खाले पत्थरका भाँडा धोएरै शुद्ध हुन्छन् । साग, कन्दमूल, फलफूल र दलहन पनि पखालेरै शुद्ध हुन्छन् ।

मार्जनाद्यज्ञपात्राणां पाणिना यज्ञकर्मणि ।
उष्णाम्भसा तथा शुद्धि सस्नेहानां विनिर्दिशेत् ॥५॥

यज्ञकर्मका यज्ञपात्रहरु हाथले माझेर तथा चिल्लो लागेका त्यस्ता
पात्रहरु तातो पानीले शुद्ध हुने भनिएको छ ।

शयनासनयानानां स्फ्यशूर्पशकटस्य च ।
शुद्धिः संप्रोक्षणाद्यज्ञे कटकेन्धनयोस्तथा ॥६॥

शैया, आसन, सवारी, स्फ्य?, नाङ्लो, गाडा र चकटी तथा इन्धन जल छर्केर शुद्ध हुन्छन् ।

मार्जनाद्वेश्मनां शुद्धिःक्षितेः शोधस्तु तत्क्षणात् ।
संमार्जितेन तोयेन वाससां शुद्धिरिष्यते ॥७॥

घरको तथा भुईंको शुद्धि बढारेर वा दलेर तुरुन्त हुन्छ । पानीले धुनाले कपडा शुद्ध हुने मानिएको छ ।

**बहूनां प्रोक्षणाच्छुद्धिर्धान्यादीनां विनिर्दिशेत् ।**
**प्रोक्षणात्संहतानां च दारवाणां च तत्क्षणात् ॥८॥**

धेरै अनाज जल छर्कनाले शुद्धि हुन्छ भनी बताइएको छ । काठका टुक्रा जोडी बनाइएका वा सिङ्गो काठले बनेका वस्तुको पनि जल छर्कनाले तुरुन्त शुद्धि हुन्छ ।

**सिद्धार्थकानां कल्केन श्रृङ्गदन्तमयस्य च ।**
**गोवालैः फलपात्राणामस्थ्नां श्रृङ्गवनां तथा ॥९॥**

सिङ र हातिको दाँतका सामान सर्स्यूंको पिनाले तथा लौका, हाड र सिङले बनेका सामानको शुद्धि गाईको रौंले बनेको कुचोले हुन्छ ।

**निर्यासानां गुडानां च लवणानां तथैव च ।**
**कुसुम्भकुङ्कुमानां च ऊर्णाकार्पासयोस्तथा ॥१०॥**
**प्रोक्षणात्कथिता शुद्धिरित्याह भगवान्यमः ।**
**भूमिष्ठमुदकं शुद्धं शुचि तोयं शिलागतम् ॥११॥**
**वर्णगन्धरसैर्दुष्टैर्वर्जितं यदि तद्भवेत् ।**
**शुद्धं नदीगतं तोयं सर्वदैव तथाऽऽकरम् ॥१२॥**

चोप, रस र नुनको तथा कुसुम्भ र कुङ्कुमको तथा ऊन र कपासको शुद्धि पानी छर्कनाले हुने भनिएको छ । यस्तो भगवान् यमको वचन छ । यदि रङ, गन्ध र दुष्ट रस छैन भने जमिनमा रहेको तथा पत्थरमा रहेको जल पवित्र मानिएको छ । यस्तै नदीमा बगिरहेको तथा खानीको जल पनि सधैं शुद्ध हुन्छ ।

**शुद्धं प्रसारितं पण्यं शुद्धे चाजाश्वयोर्मुखे ।**
**मुखवर्जं तु गौः शुद्धा मार्जारश्चाऽऽश्रमे शुचिः ॥१३॥**

बजारमा फिँजिएको बिक्रीको सामान शुद्ध हुन्छ । बोका र घोडाको मुख शुद्ध हुन्छ । गाईको मुख बाहेक अरु अङ्ग शुद्ध हुन्छन् । घरपालुवा बिरालो शुद्ध हुन्छ ।

**शय्या भार्या शिशुर्वस्त्रमुपवीतं कमण्डलुः ।**

**आत्मनः कथितं शुद्धं न शुद्धं हि परस्य च ॥१४॥**

शैया, पत्नी, बालक, कपडा, जनै र कमण्डलु आफ्ना शुद्ध र अरुका अशुद्ध हुन्छन् ।

**नारीणां चैव वत्सानां शकुनीनां शुनां मुखम् ।**
**रात्रौ प्रस्रवणे वृक्षे मृगयायां सदा शुचि ॥१५॥**

नारी, बाछो, चरा र कुकुरको मुख क्रमैले रातमा चुम्बन गर्दा, माउको थुन चुस्दा, रुखको फल खाँदा र शिकारमा जाँदा शुद्ध हुन्छन् ।

**शुद्धा भर्तुश्चतुर्थेऽह्नि स्नानेन स्त्री रजस्वला ।**
**दैवे कर्मणि पित्र्ये च पञ्चमेऽहनि शुध्यति ॥१६॥**

परसरेकी नारी पतिका लागि चौथो दिन नुहाए पछि शुद्ध हुन्छे तर देवपितृ कार्यका लागि पाँचौं दिनमा शुद्ध हुन्छे ।

**रथ्याकर्दमतोयेनष्ठीवनाद्येन वाऽप्यथ ।**
**नाभेरूर्ध्वं नरः स्पृष्टः सद्यः स्नानेन शुध्यति ॥१७॥**

गल्लीको हिलो-पानी, थुक आदि नाइटोभन्दा माथि परेको मानिस नुहाएर तुरुन्त शुद्ध हुन्छ ।

**कृत्वा मूत्र पुरीषं स्नात्वा भोक्तुमनास्तथा ।**
**भुक्त्वा क्षुत्वा तथा सुप्त्वा पीत्वा चाम्भोऽवगाह्य च ॥१८॥**

मलमूत्र त्यागेर, नुहाएर, खान मन लाग्दा, खाएर, थुकेर, सुतेर उठेपछि, पिएपछि, पानीलाई डुबुल्की लाएपछि, ...।

**रथ्यां वाऽऽक्रम्य  वाऽऽचामेद्वासो विपरिधाय च ।**
**कृत्वा मूत्रपुरीषं च लेपगन्धापहं द्विजः ॥१९॥**

...हिँडेर, कपडा फेरेर र दिसापिसाब गरिसकेर आचमन गर्नू । द्विजले दिसापिसाब गरी माटोको लेपले सफा गरी दुर्गन्ध हटाउनू ।

**उद्धृतेनाम्भसा शौचं मृदा चैव समाचरेत् ।**

मेहने मृत्तिकाः सप्त लिङ्गे द्वे परिकीर्तिते ॥२०॥
एकस्मिन्विंशतिर्हस्ते द्वयोर्ज्ञेयाश्चतुर्दश ।
तिस्रस्तु मृत्तिका देयाःकृत्वा नखविशोधनम् ॥२१॥
तिस्रस्तु पादयोर्ज्ञेयाः शौचकामस्य सर्वदा ।
शौचमेतद् गृहस्थानां द्विगुणं ब्रह्मचारिणाम् ॥२२॥
त्रिगुणं च वनस्थानां यतीनां तु चतुर्गुणम् ।
मृत्तिका च विनिर्दिष्टा त्रिपर्वाऽऽपूर्यते यया ॥२३॥

दिसा बसेपछि गुदद्वारमा सात पटक तथा पिसाब गरेपछि जननेन्द्रियमा दुई पटक माटो दलेर शुद्धि गर्नु पर्दछ । देब्रे हातमा बीस पटक, दुवै हातमा चौध पटक तथा नङ समेत सफा गरी माटोले तीन पटक शुद्धि गर्नू पर्दछ । शुद्धी चाहने पुरुषले गोडा पनि तीन पटक माटो दलेर शुद्धि गर्नु पर्दछ । यस्तो शौच गृहस्थका लागि बताइएको हो । ब्रह्मचारीले यसको दोबर, वानप्रस्थीले यसको तेबर तथा सन्यासीले यसको चौबर शौच गर्ने विधान छ । एक पटकमा यति माटो लिनु जसले औंलाका तीनै भाग (पोर) भरियोस् ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे षोडशोऽध्यायः ॥१६॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
सोह्रौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-२७२+२३=२९५



शुरुदेखिको श्लोक सङ्ख्या : २९५



## ॥ अथ सप्तदशोऽध्यायः ॥
## (सत्रौं अध्याय)
### । अथ क्षत्रियादिवधे गवाद्यपहारे व्रतवर्णनम् ।
### (प्रायश्चित)

नित्यं त्रिषवणस्नायी कृत्वा पर्णकुटीं वने ।
अधःशायी जटाधारी पर्णमूलफलाशनः ॥१॥
ग्रामं विशेच्च भिक्षार्थं स्वकर्म परिकीर्तयन् ।
एककालं समश्नीयाद्वर्षे तु द्वादशे गते ॥२॥
हेमस्तयी सुरापश्च ब्रह्महा गुरुतल्पगः ।

**व्रतेनैतेन शुध्यन्ते महापातकिनस्त्विमे ॥३॥**

दिनहुँ बिहान, दिउसो र साँझ नुहाउँदै, वनमा पातको कुटी बनाएर जमिनमा सुत्दै, जटा पाल्दै, पात-कन्दमूल र फलफूल खाने भई आफूले गरेको पापकर्म बताउँदै भिक्षाका लागि गाऊँमा छिरोस्। दिनको एक पटक खाओस्। यसरी बाह्र वर्ष बिते पछि सुनचोर, मदिरा पेयी, ब्राह्मणको हत्यारा र गुरुपत्नी गमन गर्ने महापापी यो व्रतले गर्दा शुद्ध हुन्छ।

**यागस्थं क्षत्त्रियं हत्वा वैश्यं हत्वा च याजकम्।**
**एतदेव व्रतं कुर्यादात्रेयीविनिषूदकः ॥४॥**

होम गरिरहेको क्षत्रियलाई मारे वा होम गरिरहेको वैश्यलाई मारे तथा रजस्वलालाई बलात्कार गर्नेले पनि यही व्रत गर्नू।

**कूटसाक्ष्यं तथैवोक्त्वा निक्षेपमपहृत्य च।**
**एतदेव व्रतं कुर्यात्त्यक्त्वा च शरणागतम्॥५॥**

झुटो साछी बसेर, अर्काको नासो पचाएर पनि अनि शरणमा आएकोलाई छाडेर पनि यही व्रत गर्नू।

**आहिताग्नेः स्त्रियं हत्वा मित्रं हत्वा तथैव च।**
**हत्वा गर्भमविज्ञातमेतदेव व्रतं चरेत्॥६॥**

अग्नि आधान गरिएकी द्विजपत्नी तथा मित्रको हत्याराले एवं अनजानमा गर्भ हत्या गर्नेले पनि यही व्रत गर्नू।

**वनस्थं च द्विजं हत्वा पार्थिवं च कृतागसम्।**
**एतदेव व्रतं कुर्याद् द्विगुणं च विशुद्धये ॥७॥**

वनवासी ब्राह्मणको हत्या गर्नेले र पापी राजाको हत्या गर्नेले शुद्धताको लागि यसको दोबर व्रत गर्नू।

**क्षत्त्रियस्य च पादोनं वधेऽर्धं वैश्यघातने।**
**अर्धमेव सदा कुर्यात्स्त्रीवधे पुरुषस्तथा ॥८॥**

क्षत्रीको हत्या गर्नेले यसको पौने, वैश्यको हत्या गर्नेले यसको आधा र
स्त्रीको हत्या गर्ने पुरुषले यसको आधा व्रत गर्नू ।

**पादं तु शूद्रहत्यायामुदक्यागमने तथा ।**
**गोवधे च तथा कुर्यात्परदारगतस्तथा ॥९॥**

शूद्रको हत्या गरे, रजस्वलालाई सम्भोग गरे, गाई मारे, तथा
परस्त्री गमन गरे पनि चौथाई व्रत गर्नू ।

**पशून्हत्वा तथा ग्राम्यान्मासं कृत्वा विचक्षणः ।**
**आरण्यानां वधे तद्वत्तदर्धं तु विधीयते ॥१०॥**

घरपालुवा पशु मार्नेले यो व्रत एक महिना गरोस् । जङ्गली
जनावर मार्नेले त्यसको आधा व्रत गर्ने विधान छ ।

**हत्वा द्विजं तथा सर्पं जलेशयबिलेशयान् ।**
**सप्तरात्रं तथा कुर्याद् व्रतं ब्रह्महणस्तथा ॥११॥**

चरा, सर्प, जलचर र प्वालमा रहने जीव मारेर सात दिनसम्म
यो ब्रह्महत्याको व्रत यसरी नै गर्नू ।

**अनस्थ्नां शकटं हत्वा सास्थ्नां दशशतं तथा ।**
**ब्रह्महत्याव्रतं कुर्यात्पूर्णं संवत्सरं नरः ॥१२॥**

एउटा मात्र हाड हुने तथा हजार हाड हुने जीव मार्ने
मनुष्यले पूरै वर्ष यो ब्रह्महत्याको व्रत गरोस् ।

**यस्य यस्य च वर्णस्य वृत्तिच्छेदं समाचरेत् ।**
**तस्य तस्य वधे प्रोक्तं प्रायश्चित्तं समाचरेत् ॥१३॥**

जुन् जुन् वर्णको आजीविकाको साधन नासेको हो त्यही वर्णका
मानिसलाई मार्दा गर्नूपर्ने प्रायश्चित गर्नू ।

**अपहृत्य तु वर्णानां भुवं प्राप्य प्रमादतः ।**

**प्रायश्चित्तं वधे प्रोक्तं ब्राह्मणानुमतं चरेत् ॥१४॥**

नजानीकन जुन वर्णको जमिन हडपेर लिएको हो ब्राह्मणाज्ञाले त्यही
वर्णको हत्याको लागि बताएको प्रायश्चित गर्नू ।

**गोऽजाश्वस्यापहरणे मणीनां रजतस्य च ।**
**जलापहरणे चैव कुर्यात्संवत्सरव्रतम् ॥१५॥**

गाई, बाख्रा, घोडा, मणि र चाँदी तथा पानी चोर्नेले एक वर्षको व्रत गर्नू ।

**तिलानां धान्यवस्त्राणां मद्यानामामिषस्य च ।**
**संवत्सरार्धं कुर्वीत व्रतमेतत्समाहितः ॥१६॥**

तिल, अनाज, वस्त्र, मदिरा र मासु चोरे सावधान भई यो व्रत आधा वर्षसम्म गर्नू ।

**तृणेक्षुकाष्ठतक्राणां रसानामपहारकः ।**
**मासमेकं व्रतं कुर्याद् गन्धानां सर्पिषां तथा ॥१७॥**

घाँस, ऊखु, काठ, मोही र रसहरु तथा मसला र घिउ चोर्नेले यो व्रत  एक महिना गर्नू ।

**लवणानां गुडानां च मूलानां कुसुमस्य च ।**
**मासार्धं तु व्रतं कुर्यादेतदेव समाहितः ॥१८॥**

नुन, सखर, कन्दमूल र फूल चोर्नेले सावधानीपूर्वक यो व्रत आधा महिना गर्नू ।

**लौहानां वैदलानां च सूत्राणां चर्मणां तथा ।**
**एकरात्रव्रतं कुर्यादेतदेव समाहितः ॥१९॥**

फलाम, बाँसका टोकरी, धागो र छाला चोर्नेले सावधानीपूर्वक यो व्रत एक रात गर्नू ।

**भुक्त्वा पलाण्डुं लशुनं मद्यं च कवकानि च ।**
**नारं मलं तथा मांसं विड्वराहं खरं तथा ॥२०॥**
**गौधेरकुञ्जरोष्ट्रंच सर्वपञ्चनखं तथा ।**
**क्रव्यादं कुक्कुटं ग्राम्यं कुर्यात्संवत्सरं व्रतम् ॥२१॥**

प्याज, लसुन, मदिरा, च्याउ, मानिसको मल तथा सुँगुर-गधा-गोही-हाती-ऊँट-सबै खाले पाँच वटा नङ्गा हुने जीव, सबै खाले मांसाहारी जीव र कुखुराको मासु खाए एक वर्षको व्रत गर्नू ।

**भक्ष्याः पञ्चनखास्त्वेते गोधाकच्छपशल्लकाः ।**
**खड्गश्च शशकश्चैव तान्हत्वा च चरेद् व्रतम् ॥२२॥**

गोही, कछुवा, दुम्सी, गैंडा र खरायो पाँच वटा नङ्ग्रा हुने भक्ष्य जीव हुन् । यिनलाई मारे यो व्रत गनु ।

**हंसं मद्गुं बकं काकं काकोलं खञ्जरीटकम् ।**
**मत्स्यादांश्च तथा मत्स्यान्जलाकं शुकसारिके ॥२३॥**
**चक्रवाकं प्लवं कोकं मण्डूकं भुजगं तथा ।**
**मासमेकं व्रतं कुर्यादेतच्चैव न भक्षयेत् ॥२४॥**

हाँस, एक थरी जलपक्षी, बकुलो, काग, डुम काग, बाहुनीचरी, माछा खाने चरा, माछा, एकजातको बकुलो, सुँगा, मैना, चखेवा, एक थरी जलपक्षी, एक थरी चखेवा, भ्यागुतो, सर्प खाए एक महिनाको व्रत गर्नू र तिनलाई नखानू ।

**राजीवान्सिंहतुण्डांश्च शकुलांश्च तथैव च ।**
**पाठीनरोहितौ भक्ष्यौ मत्स्येषु परिकीर्तितौ ॥२५॥**

राजीव, सिंहतुण्ड, शकुल माछा खाए यही व्रत गर्नू । पाठीन र रोहित नामका माछा खानयोग्य बताइएको छ ।

**जलेचरांश्च जलजान्मुखाग्रनखविष्किरान् ।**
**रक्तपादाञ्जालपादान्सप्ताहं व्रतमाचरेत् ॥२६॥**

जलमा उत्पन्न हुने, जलमा विचरण गर्ने, चुच्चो तीखो हुने, रातो खुट्टा हुने र जालजस्ता खुट्टा हुने चरा खाए एक हप्ताको व्रत गर्नू ।

**तित्तिरं च मयूरं च लावकं च कपिञ्जलम् ।**
**वार्ध्रीणसं वर्तकं च भक्ष्यानाह यमस्तथा ॥२७॥**

तित्रो, मयूर, एक थरी बट्टाई, मौरी खाने चरा, वार्धीणस (चरा) र
बट्टाईलाई यमले खानयोग्य भनेका छन् ।

**भुक्त्वा चोभयतोदन्तं तथैकशफदंष्ट्रिणः ।**
**तथा भुक्त्वा तु मांसं वै मासार्धं व्रतमाचरेत्॥२८॥**

दुबै च्यापुमा दाँत हुने, एकखुरे तथा दाँत हुने पशु मारेमा वा तिनको
मासु खाएमा पन्ध्र दिनको व्रत गर्नू ।

**स्वयं मृतं वृथामांसं माहिषं त्वाजमेव च ।**
**गोश्च क्षीरं विवत्सायाःसंधिन्याश्च तथा पयः ॥२९॥**
**संधिन्यमेध्यं भक्षित्वा पक्षं तु व्रतमाचरेत् ।**
**क्षीराणि यान्यभक्ष्याणि तद्विकाराशने बुधः ॥३०॥**
**सप्तरात्रं व्रतं कुर्याद्यदेतत्परिकीर्तितम् ।**
**लोहितान्वृक्षनिर्यासान्व्रश्चनप्रभवांस्तथा ॥३१॥**
**केवलानि च शुक्तानि तथा पर्युषितं च यत् ।**
**गुडशुक्तं तथा भुक्त्वा त्रिरात्रं च व्रती भवेत्॥३२॥**

आफैं मरेका भैंसी वा बाख्रीको बेकारको मासु खाए, हतुवा वा गर्भिणी गाईको दूध पिए, गर्भिणी गाईको अमेध्य (होम हाल्न नहुने, अपवित्र दूध दही आदि) खाए पन्ध्र दिनको व्रत गर्नू । पिउन नहुने दूधले बनेका परिकार खाए बुद्धिमानले सात दिनको व्रत गर्नू-यस्तो भनिएको छ । वृक्षको
रातो खोटो, काटेर निक्लने चोप, अमिलो मात्र र
सखरको अमिलो खाए तीन दिनको व्रत गर्नू ।

**दधि भक्ष्यं च शुक्तेषु यच्चान्यद्दधिसंभवम् ।**
**गुडशुक्तं तु भक्ष्यं स्यात्ससर्पिष्कमिति स्थितिः ॥३३॥**

अमिलोमा दही र दहीजन्य पदार्थ खान हुन्छ । सखरले बनेको र घिउ मिसिएको
अमिलो खान हुन्छ । यस्तो स्थिति (विधि) छ ।

**यवगोधूमजाः सर्वे विकाराः पयसश्च ये ।**
**राजवाडवकुल्यं च भक्ष्यं पर्युषितं भवेत्॥३४॥**

जौ तथा गहुँले बनेका सबै पदार्थ र दूधले बनेका पदार्थ एवं राजवाडव

मृगको मासु बासी भए पनि खान हुन्छ ।

**राजीवपक्वमांसं च सर्वयत्नेन वर्जयेत् ।**
**संवत्सरं व्रतं कुर्यात्प्राश्यैताञ्ज्ञानतस्तु तान् ॥३५॥**

राजीव नामक मृगको मासु भुटेर बनाइएको कवाफ यत्नले नखानू । जानीजानी खाए एक वर्षसम्म व्रत गर्नू ।

**शूद्रान्नं ब्राह्मणो भुक्त्वा तथा रङ्गावतारिणः ।**
**चिकित्सकस्य क्षुद्रस्य तथा स्त्रीमृगजीविनः ॥३६॥**

ब्राह्मणले शूद्र, नट, चिकित्सकको, नीच मनुष्यको तथा स्त्री र मृगमा बाँच्नेको,.. ।

**षण्डस्य कुलटायाश्च तथा बन्धनचारिणः ।**
**बद्धस्य चैव चोरस्य अवीरायाः स्त्रियस्तथा ॥३७॥**

...नपुंसकको, व्यभिचारिणी स्त्रीको तथा बन्धनमा बाँध्नेको, कैदीको, चोरको, पुत्रहीन स्त्रीको तथा...।

**चर्मकारस्य वेणस्य क्लीवस्य पतितस्य च ।**
**रुक्मकारस्य धूर्तस्य तथा वार्धुषिकस्य च ॥३८॥**

...चर्मकारको, राग गाउनेको, नामर्दको, पतितको, सुनारको, मूर्खको तथा ब्याजोपजीविको,...।

**कदर्यस्य नृशंसस्य वेश्यायाः कितवस्य च ।**
**गणान्नं भूमिपालान्नमन्नं चैव श्वजीविनाम् ॥३९॥**

...छुच्चोको, निर्दयीको, वेश्याको, जुवाडेको, समूहको अन्न, राजाको अन्न, कुकुरसम्बन्धी पेशा हुनेको अन्न,..।

**मौञ्जिकान्नं सूतिकान्नं भुक्त्वा मासं व्रतं चरेत् ।**
**शूद्रस्य सततं भुक्त्वा षण्मासान्व्रतमाचरेत् ॥४०॥**

...मुँजसम्बन्धी पेसा हुनेको र सुत्केरीको अन्न खाए एक महिनासम्म व्रत गर्नू तथा लगातार

शूद्रको अन्न खाए छ महिनासम्म व्रत बस्नू ।

**वैश्यस्य तु तथा भुक्त्वा त्रीन्मासान्व्रतमाचरेत् ।**
**क्षत्रियस्य तथा भुक्त्वा द्वौ मासौ व्रतमाचरेत् ॥४१॥**

वैश्यको अन्न लगातार खाए तीन महिनासम्म व्रत गर्नू । क्षत्रीको अन्न लगातार खाए दुई महिनासम्म व्रत गर्नू ।

**ब्राह्मणस्य तथा भुक्त्वा मासमेकं व्रतं चरेत् ।**
**अपः सुराभाजनस्थाः पीत्वा पक्षं व्रतं चरेत् ॥४२॥**

बाहुनको अन्न लगातार खाए एक महिना र रक्सीको भाँडामा राखेको पानी पिए पन्ध्र दिन व्रत गर्नू ।

**मद्यभाण्डगताः पीत्वा सप्तरात्रं व्रतं चरेत् ।**
**शूद्रोच्छिष्टाशने मासं पक्षमेकं तथा विशः ॥४३॥**

मादक पदार्थको भाँडाको पानी पिए सात रात, शूद्रको जुठो खाए एक महिना र वैश्यको जुठो खाए पन्ध्र दिन व्रतगर्नू ।

**क्षत्रियस्य तु सप्ताहं ब्राह्मणस्य तथा दिनम् ।**
**अथ श्राद्धाशने विद्वान्मासमेकं व्रती भवेत् ॥४४॥**

क्षत्रीको जुठो खाए एक हप्ता र ब्राह्मणको जुठो खाए एक दिन तथा श्राद्धमा खाए एक महिना (सुन चोरले गर्ने) व्रत गर्नू ।

**परिवित्तिः परिवेत्ता यया च परिविन्दति ।**
**व्रतं संवत्सरं कुर्युर्दातृयाजकपञ्चमाः ॥४५॥**

परिवित्ति, परिवेत्ता, त्यस्तीसँग विहे गर्ने कन्या, कन्यादाता र पुरोहित यी पाँचैले एक वर्षको व्रत गर्नू ।

**काकोच्छिष्टं गवाऽऽघ्रातं भुक्त्वा पक्षं व्रती भवेत् ।**
**दूषितं केशकीटैश्च मूषिकालाङ्गूलेन च ॥४६॥**

कागको जुठो र गाईले सुँघेको खाए पन्ध्र दिन तथा रौं वा कीराले दूषित,
मुसा-बाँदर-भिँगा र लामखुट्टेले दूषित..।

**मक्षिकामशकेनापि त्रिरात्रं तु व्रती भवेत् ।**
**वृथा कृसरसंयावपायसापूपशष्कुलीः ॥४७॥**

खाना खाए तीन रात व्रत गर्नू । खानका लागि मात्र पकाइएको तिलचामलको खिचडी,
जौको मीठाई, खीर, पुवा र पुरी खाए..।

**भुक्त्वा त्रिरात्रं कुर्वीत व्रतमेतत्समाहितः ।**
**नील्या चैव क्षतो विप्रः शुना दष्टस्तथैव च ॥४८॥**

संयमित भई तीन रात व्रत गर्नू । ब्राह्मणलाई नीरको काठले गर्दा घाउ भए वा कुकुरले टोके
...।

**त्रिरात्रं तु व्रतं कुर्यात्पुंश्चलीदशनक्षतः ।**
**पादप्रतापनं कृत्वा वह्निं कृत्वा तथाप्यधः ॥४९॥**

वेश्याको दाँतले टोकेर घाउ हुन गए तीन रात व्रत गर्नू । गोडा आगोमा सेकाए
वा गोडामुनि आगो राखे पनि यसै गर्नू ।

**कुशैः प्रमृज्य पादौ च दिनमेकं व्रती भवेत् ।**
**नीलीवस्त्रं परीधाय भुक्त्वा स्नानार्हणस्तथा ॥५०॥**

कुशले गोडा मिचे एक दिन व्रत गर्नू । नीलो वस्त्र लगाए, छोए नुहाउनू पर्नेको अन्न खाए ।

**त्रिरात्रं च व्रतं कुर्य्याच्छित्त्वा गुल्मलतास्तथा ।**
**अध्यास्य शयनं यानमासनं पादुके तथा ॥५१॥**

बुट्यान र लहरा काटे तीन रात व्रत गर्नू । पलाशको खाटमा सुते वा
यान-आसन वा खराउ चढे...।

**पलाशस्य द्विजश्रेष्ठस्त्रिरात्रं तु व्रती भवेत् ।**
**वाग्दुष्टं भावदुष्टं च भाजने भावदूषिते ॥**

**भुक्त्वाऽन्न ब्राह्मणःपश्चात्त्रिरात्रं तु व्रती भवेत्॥५२॥**

द्विजश्रेष्ठले तीन रात  व्रत गर्नू । विचारले, वचनले र भावले दूषित भाँडाको अन्न खाए बाहुनले तीन रात व्रत गर्नू ।

**क्षत्त्रियस्तु रणे दत्त्वा पृष्ठं प्राणपरायणः ।**
**संवत्सरव्रतं कुर्य्याच्छित्त्वा वृक्षं फलप्रदम्॥५३॥**

क्षत्रियले ज्यान जोगाउन युद्धबाट भागे, फल दिने रुख काटे एक वर्ष व्रत गर्नू ।

**दिवा च मैथुनं गत्वा स्नात्वा नग्नस्तथाऽम्भसि ।**
**नग्नां परस्त्रियं दृष्ट्वा दिनमेकं व्रती भवेत्॥५४॥**

दिनमा संभोग गरे, नाङ्गै जलमा नुहाए तथा नाङ्गी परस्त्री देखे एक दिन व्रत गर्नू ।

**क्षिप्त्वाऽग्नावशुचि द्रव्यं तदेवाम्भसि मानवः ।**
**मासमेकं व्रतं कुर्यादुपक्रुध्य तथा गुरुम्॥५५॥**

आगोमा अपवित्र पदार्थ हाले वा पानीमा हाले वा गुरुसँग रिसाए
मानिसले एक महिना व्रत गर्नू ।

**पीतावशेषं पानीयं पीत्वा च ब्राह्मणः क्वचित् ।**
**त्रिरात्रं तु व्रतं कुर्याद्वामहस्तेन वा पुनः ॥५६॥**

अरुले पिएर बचेको पानी पिएमा वा देब्रे हातले पानी पिएमा बाहुनले तीन रात व्रत गर्नू ।

**एकपङ्क्त्युपविष्टेषु विषमं यः प्रयच्छति ।**
**स च तावदसौ पक्षं कुर्यात्तु ब्राह्मणो व्रतम्॥५७॥**

एउटै हारमा बसेकालाई भेदभाव गरी (भोजन) दिने बाहुनले पन्ध्र दिन व्रत गर्नू ।

**धारयीत्वा तुलाञ्चैव विषमं कारयेद्वणिक् ।**
**सुरालवणमद्यानां दिनमेकं वैती भवेत्॥५८॥**
व्यापारी हातमा तराजू लिई कम तौलन्छ तथा रक्सी, नुन र

मादक पदार्थ बेच्दछ भने एक दिन व्रत गर्नू ।

**मांसस्य विक्रयं कृत्वा कुर्याच्चैव महाव्रतम् ।**
**विक्रीय पाणिना सद्यस्तिलानि च तथाचरेत् ॥५९॥**

मासु बेचे महाव्रत गर्नू, आफ्नो हातले तिल बेचे पनि तुरुन्त यही व्रत गर्नू ।

**हुङ्कारं ब्राह्मणस्योक्त्वा त्वङ्कारं च गरईसः ।**
**दिनमेकं व्रतं कुर्यात्प्रयतः सुसमाहितः ॥६०॥**

बाहुनलाई हकारेमा वा मान्यजनलाई तँ भनेमा संयमित र शान्त चित्तले एक दिन व्रत गर्नू ।

**प्रेतस्य प्रेतकार्याणि अकृत्वा धनहारकः ।**
**वर्णानां यद् व्रतं प्रोक्तं तद् व्रतं प्रयतश्चरेत् ॥६१॥**

(अपुताली) प्रेतधन लिई प्रेतकर्म नगरेमा वर्ण अनुसार जेजे व्रत बताइएको छ त्यही व्रत संयमित भई गर्नू ।

**कृत्वा पापं न गूहेत गुह्यमानं विवर्धते ।**
**कृत्वा पापं बुधः कुर्यात्पर्षदोऽनुमतं व्रतम् ॥६२॥**

पाप गरी नलुकाउनू, लुकाए बढ्दछ । पापलाई विद्वत् परिषदमा
भन्नू र तिनको मत अनुसारको व्रत गर्नू ।

**तस्करश्वापदाकीर्णे बहुव्याधमृगे वने ।**
**न व्रतं ब्राह्मणः कुर्यात्प्राणवाधाभयात्सदा ॥६३॥**

सधैं चोर, हिंस्रक जनावर, अनेक व्याधा र जनावरले भरिएको
वनमा बाहुनले ज्यानको डर हुने हुनाले व्रत नगर्नू ।

**सर्वत्र जीवनं रक्षेज्जीवन्नपापमपोहति ।**
**व्रतैः कृच्छ्रैश्च दानैश्च इत्याह भगवन्यमः ॥६४॥**

जहाँसुकै पहिले आफ्नो ज्यान नै जोगाउनू किनकि ज्यान भए नै मानिसले व्रत,

कृच्छ्र, दान आदिले पाप भगाउन सक्छ भनी भगवान यमले बताएका छन् ।

**शरीरं धर्मसर्वस्वं रक्षणईीं प्रयत्नतः ।**
**शरीरात्स्रवते धर्मः पर्वतात्सलिलं यथा ॥६५॥**

शरीर धर्मको सर्वस्व हो । यसको प्रयत्नपूर्वक रक्षा गर्नू ।
धर्म शरीरबाट यसरी बग्दछ जसरी पानी पर्वतबाट ।

**आलोच्य धर्मशास्त्राणि समेत्य ब्राह्मणैः सह ।**
**प्रायश्चित्तं द्विजो दद्यात्स्वेच्छया न कथंचन ॥६६॥**

धर्मशास्त्रको समिक्षा र विद्वानको राय लिएर मात्र बाहुनले प्रायश्चितको तरिका बताउनू आफ्नो इच्छाले होइन ।

॥ इति श्री शाङ्खई धर्मशास्त्रे सप्तदशोऽध्यायः ॥१७॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
सत्रौं अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-२९५+६६=३६१



शुरुदेखिको श्लोक सङ्ख्या : ३६१



## ॥ अथाष्टादशोऽध्यायः ॥
## (अठारौं अध्याय)
## । अथाघमर्षण-पराक-कृच्छ्रनतिकृच्छ्र-सान्तपनादिव्रतवर्णनम् ।
## (विभिन्न व्रत)

**त्र्यहं त्रिषवणस्नायी स्नाने स्नानेघमर्षणम् ।**
**निमग्नस्त्रिः पठेदप्सु न भुञ्जीत दिनत्रयम् ॥१॥**
**वीरासनं च तिष्ठेत गां दद्याच्च पयस्विनीम् ।**
**अघमर्षणमित्येतद् व्रतं सर्वाघनाशनम् ॥२॥**

तीन दिनसम्म त्रीषवण स्नान गर्नू । प्रत्येक स्नानमा पानीमा डुबुल्की लगाएर अघमर्षण पाठ गर्नू । तीन दिनसम्म नखानू । वीरासनमा रहनू । लैनु गाई दान दिनू । सबै पाप नाश गर्ने यो अघमर्षण व्रत भनी बताइएको छ ।

**त्र्यहं सायं त्र्यहं प्रातस्त्र्यहमद्यादयाचितम् ।**
**त्र्यहं परं च नाश्नीयात्प्राजापत्यं चरन्व्रतम् ॥३॥**

तीन दिनसम्म साँझ र तीन दिन बिहान मात्र खानू । तीन दिन नमागिकन जे भेटिन्छ खानू र तीन दिन केही नखानू । यसरी प्राजापत्य व्रत गर्नू ।

**त्र्यहमुष्णं पिबेत्तोयं त्र्यहमुष्णं घृतं पिबेत् ।**
**त्र्यहमुष्णं पयः पीत्वा वायुभक्षस्त्र्यहं भवेत् ॥४॥**

तीन दिन तातो पानी, तीन दिन तातो घिउ, तीन दिन तातो दूध र तीन दिन वायु पिउँदै बस्नू ।

**तप्तकृच्छ्रं विजानीयात् शीतैः शीतमुदाहृतम् ।**
**द्वादशाहोपवासेन पराकः परिकीर्तितः ॥५॥**

यसलाई तप्तकृच्छ्र व्रत भनी जान्नू । चिसो खाए शीतकृच्छ्र व्रत भनी जान्नू । बाह्र दिनको उपवासलाई पराकव्रत भनी बताइएको छ ।

**विधिनोदकसिद्धानि मासमश्नीत यत्नतः ।**
**सक्तून् वा सोदकान्मासं कृच्छ्रं वारुणमुच्यते ॥६॥**

पानीले विधिपूर्वक पकाएको अन्न वा पानी र सातु एक महिनासम्म खानू । यसलाई वारुणकृच्छ्र-व्रत भनिन्छ ।

**बिल्वैरामलकैर्वाऽपि पद्माक्षैरथवा शुभैः ।**
**मासेन लोकेऽतिकृच्छ्रः कथ्यते बुद्धिसत्तमैः ॥७॥**

बेल, अमला वा पवित्र कमलका बीऊ खाएर महिनाभर जुन व्रत गरिन्छ, त्यसलाई लोकमा विद्वानहरुबाट अतिकृच्छ्र भनिएको छ ।

**गोमूत्रं गोमयं क्षीरं दधि सर्पिः कुशोदकम् ।**

**एकरात्रोपवासश्च कृच्छ्रं सांतपनं स्मृतम् ॥**
**व्रतैस्तु त्र्यहमभ्यस्तं महासांतपनं स्मृतम् ॥८॥**

गहुँत, गोबर, दूध, दही, घीउ, कुशपानी र एक रातको उपवासलाई कृच्छ्र-सान्तपन मानिन्छ । कृच्छ्र सान्तपनलाई तीन दिन दोहोऱ्याए महासान्तपन व्रत हुन्छ ।

**पिण्याकाचामतक्राम्बुसक्तूनां प्रतिवासरम् ।**
**उपवासान्तराभ्यासात्तुलापुरुष उच्यते ॥९॥**

यदि दिनहुँको उपवास पछि पिना, माड, मोही वा जलका साथको सातु खान अभ्यास गरिए त्यो तुलापुरुष हुन्छ ।

**गोपुरीषाशनो भूत्वा मासं नित्यं समाहितः ।**
**व्रतं तु यावकं कुर्यात्सर्वपापानुपत्तये ॥१०॥**

सबै पापको नाश गर्न सधैं शान्तचित्तले एक महिनासम्म गोबर खाई यावक नामको व्रत गर्नू ।

**ग्रासं चन्द्रकलावृद्ध्या प्राश्नीयाद्वर्धयन्सदा ।**
**ह्रासयेच्च कलाहानौ व्रतं चान्द्रायणं चरेत् ॥११॥**

चन्द्रमाको कला बढ्दै जाँदा एक, एक गाँस बढाउँदै र घट्दा एक, एक गाँस घटाउँदै खाई चान्द्रायण व्रत गर्नू ।

**मुण्डस्त्रिषवणस्नायी अधःशायी जितेन्द्रियः ।**
**स्त्रीशूद्रपतितानां च वर्जयेत्परिभाषणम् ॥१२॥**

कपाल खौरी त्रिषवण स्नान गर्नू । जितेन्द्रिय भई भुइँमा सुत्नु र स्त्री, शूद्र र पतितसँग कुराकानी नगर्नू ।

**पवित्राणि जपेच्छक्त्या जुहुयाच्चैव शक्तितः ।**
**अयं विधिः स विज्ञेयः सर्वकृच्छ्रेषु सर्वदा ॥१३॥**

सामर्थ्य अनुसार पवित्रहरुको जप र अग्निमा होम गर्नू । व्रतालुहरुले यो विधि सबै कृच्छ्रमा गर्नुपर्दछ भनी जान्नू ।

**पापात्मानस्तु पापेभ्यः कृच्छ्रैः संतारिता नराः ।**
**गतपापादिकं यान्ति नात्र कार्या विचारणा ॥१४॥**

पापीजन यी कृच्छ्र व्रतले गर्दा पापमुक्त एवं पापरहित भई स्वर्ग जान्छन् । यसमा सोचविचार गर्नुपर्ने कुनै कुरा छैन ।

**शङ्खप्रोक्तमिदं शास्त्रं योऽधीते बुद्धिमान्नरः ।**
**सर्वपापविनिर्मुक्तः स्वर्गलोके महीयते ॥१५॥**

शङ्ख मुनिले रचना गरेको यो शास्त्रलाई जो बुद्धिमान् मानिस अध्ययन गर्दछ, उ सबै पापबाट मुक्त भई स्वर्गलोकमा सम्मानित हुन्छ ।

॥ इति श्री शाङ्खीये धर्मशास्त्रे अष्टादशोऽध्यायः ॥१८॥



॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको शङ्खस्मृति,
अठारौँ अध्यायको नेपाली भावानुवाद समाप्त भयो ॥



आदितः श्लोकानां समष्टयङ्काः-३६१+१५=३७६



शुरुदेखिको श्लोक सङ्ख्या : ३७६



**॥ समाप्ता चेयं शङ्खस्मृतिः ॥**



**॥ शङ्खस्मृतिको भावानुवाद समाप्त भयो ॥**



**सबैको कल्याण होस् !**